जुन व्यक्तिको मीन राशिको सूर्य लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस धेरै चातुर्य युक्त, व्यापार आदिको राम्रो ज्ञान राख्ने भएको तथा

कु० नं० ८७१

९ ७ १० ८ ६ ११ ५ १२ सू. २ ४ १ ३

विद्याहरूलाई व्यावहारिक युक्ति तथा राजनीतिक रीतिले सिक्ने र त्यसै अनुसार चल्न जान्ने र योग्य सन्तान प्राप्त गर्ने खालको र पिताको शक्तिबाट फाइदा कमाउने, व्यापारदिबाट निकै लाभ पाउनेवाला, सर्तकता र चातुर्यहरूले कुरा-कानी गरेर काम सपार्न जान्ने, एवं आफ्नू उन्नतिकै कुरामा लागि रहने, उन्नतिको निम्ति ठूला-ठूला उपायले काम गर्न जान्ने, आफ्नू स्वार्थको सदैव ध्यान राख्ने भएको तर लौकिक पद्धतिको विपरीत चल्न नमान्ने खालको होला।

जुन व्यक्तिको मेष राशिको सूर्य लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस निकै ठूलो प्रभावशाली र शत्रुहरूमा विजय प्राप्त गर्न सक्नेवाला

कु० नं० ८७२

९ ७ १० ८ ६ ११ ५ १२ २ ४ १सू. ३

र पिताको स्थानवाट केही विरोध र केही प्रभाव पाउने खालको होला। आफ्नो अभिमान राख्नेवाला एवं मावली पक्षमा केही शक्ति र प्रभाव पाउनेवाला तथा खर्चमा केही न्यूनता पाउनेवाला र अन्य स्थानहरूको सम्पर्क पनि केही दुर्बलताले पाउनेवाला, आपत्ति र विपत्तिहरूबाट नआत्तिने खालको कुनै बलियो युक्ति द्वारा मान-प्रतिष्ठा बनाउने भएको र युक्तिहरूकै कारबार गर्नेवाला र तामसी उग्रकार्यहरू द्वारा ठूलो प्रभाव जमाउन जान्ने तथा झगडा र झ्याउलोमा ठूलो साहस देखाउने खालको होला।

जुन व्यक्तिको कर्क राशिको सूर्य लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस भाग्यमानी प्रतापी र धर्म-कर्म गर्नेवाला र ईश्वरको शक्तिको चमत्कारमा प्रसस्त आनन्द पाउने भएको पिताबाट बढी फाइदा पाउने खालको, बर्ता पुरुषार्थ गर्न सक्ने भएर पनि भाग्यलाई नै प्रधान मान्नेवाला, दाजु-भाइको सम्बन्ध स्थानमा पिताको भन्दा अलि न्यून प्रेम राख्नेवाला तथा रजोगुणी र सत्वगुणी कर्मको पालन गर्नेवाला र राजसी ऐश्वर्य केवल तकदीरको बलले प्राप्त गर्ने खालको र खूब व्यापार पनि गर्ने भएको र निकै प्रभावशालीमा गनिने तथा कीर्ति पाउने, दूरदर्शी र तत्त्वखोजी, परोपकारी ज्ञानी होला।

कु० नं० ८७५

९ ७
१० ८ ६
११ ५
१२ २ ४सू.
१ ३

जुन व्यक्तिको सिंह राशिको सूर्य लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस राज समाजको वैभव प्राप्त गर्ने भएको र निकै ठूलो हुकूमत राख्ने खालको तथा पिता स्थानको महान शक्ति पाउने अनि राज्य शासनको सम्बन्ध पाउने एवं धेरै ठूलो प्रभावशाली तथा प्रतापी र मान-सम्मान पाउने भएको र महान् उत्तेजनाहरूको कार्य झटाझट गर्ने खालको तथा निकै उग्र कर्मेष्ठी र आफ्नू व्यापार एवं कार्यशैलीको सामुन्ने कसैको पनि वास्ता नगर्ने भएको तथा पितालाई सम्मान दिनेवाला भएर पनि पिताको वास्ता नराख्ने तथा मातृ स्थानमा केही विरोध पाउने खालको र केही अशान्त प्रकृतिको होला।

कु० नं० ८७६

९ ७
१० ८ ६
११ ५सू.
१२ २ ४
१ ३

जुन व्यक्तिको कर्क राशिको सूर्य लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस भाग्यमानी प्रतापी र धर्म-कर्म गर्नेवाला र ईश्वरको शक्तिको चमत्कारमा प्रसस्त आनन्द पाउने भएको पिताबाट बढी फाइदा पाउने खालको, बर्ता पुरुषार्थ गर्न सक्ने भएर पनि भाग्यलाई नै प्रधान मान्नेवाला, दाजु-भाइको सम्बन्ध स्थानमा पिताको भन्दा अलि न्यून प्रेम राख्नेवाला तथा रजोगुणी र सत्वगुणी कर्मको पालन गर्नेवाला र राजसी ऐश्वर्य केवल तकदीरको बलले प्राप्त गर्ने खालको र खूब व्यापार पनि गर्ने भएको र निकै प्रभावशालीमा गनिने तथा कीर्ति पाउने, दूरदर्शी र तत्त्वखोजी, परोपकारी ज्ञानी होला।

कु० नं० ८७५

९ ७
१० ८ ६
११ ५
१२ २ ४सू.
१ ३

जुन व्यक्तिको सिंह राशिको सूर्य लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस राज समाजको वैभव प्राप्त गर्ने भएको र निकै ठूलो हुकूमत राख्ने खालको तथा पिता स्थानको महान शक्ति पाउने अनि राज्य शासनको सम्बन्ध पाउने एवं धेरै ठूलो प्रभावशाली तथा प्रतापी र मान-सम्मान पाउने भएको र महान् उत्तेजनाहरूको कार्य झटाझट गर्ने खालको तथा निकै उग्र कर्मेष्ठी र आफ्नू व्यापार एवं कार्यशैलीको सामुन्ने कसैको पनि वास्ता नगर्ने भएको तथा पितालाई सम्मान दिनेवाला भएर पनि पिताको वास्ता नराख्ने तथा मातृ स्थानमा केही विरोध पाउने खालको र केही अशान्त प्रकृतिको होला।

कु० नं० ८७६

९ ७
१० ८ ६
११ ५सू.
१२ २ ४
१ ३

# वृश्चिक लग्नान्तर-चन्द्रफलम्

जुन व्यक्तिको वृश्चिक राशिको चन्द्रमा लग्नबाट प्रथम स्थानमा छ भने त्यो मानिस भाग्यको दुर्बलता र मानसिक चिन्ता पाउनेवाला, बढी उत्साहका साथ व्यापारमा निकै ठूलो दौड-धूप गर्नेवाला, शरीर दुब्लो भएको तथा गृहस्थीको पूरा ख्याल राख्ने खालको र स्त्रीमा र भोगादि पक्षमा मनको विशेष आशक्ति राख्ने भएको तथा व्यापारको सम्बन्धमा मन र भाग्यको तागतले उन्नति गर्ने भएको, धर्मको अपूर्ण पालन गर्नेवाला र भाग्यको उन्नति बर्ता चाहने भए पनि अझ बढी उन्नतिका धेरै-धेरै अवसर पाएर पनि यथार्थ उन्नतिबाट विघ्न-बाधा पाउनेवाला र उच्च भावनाहरूका साथै भएर पनि मनमा दुर्बलता पाउने खालको र दैवगतिमा दिक्क र अफसोस मात्रे खालको होला।

कु० नं० ८७९

९ ७ १० ८चं. ६ ११ ५ १२ २ ४ १ ३

जुन व्यक्तिको धनराशिको चन्द्रमा लग्नबाट दोस्रो स्थानमा छ भने त्यो मानिस भाग्यमानी र धेरै धनवान् तथा भाग्यबलको तागतले बढी धनराशि कमाउनेवाला र कुटुम्बको बर्ता आनन्द पाउने खालको र धर्म संग्रह गर्दै रहँदा पनि धर्मको यथार्थ सम्बन्धबाट केही अरूचि झैं भएको, पूर्वसंचित कर्महरूको संस्कारबाट लौकिक सफलता तथा भाग्यको चमत्कारको प्रभाव पाउने भएको एवं ऐश्वर्य भोगनेवाला र आयुमा बुद्धिको योग पाउने खालको र जीवनको दिनचर्यामा गौरव तथा सम्मानको आनन्द अनुभव गर्ने किसिमको र मानसिक विचारहरूको तागतबाट र धर्म बलको तागतबाट धन-वृद्धि गर्ने र बढी धनको इच्छा राख्ने व्यक्ति होला।

कु० नं० ८८०

९चं. ७ १० ८ ६ ११ ५ १२ २ ४ १ ३

# वृश्चिक लग्नान्तर-चन्द्रफलम्

जुन व्यक्तिको वृश्चिक राशिको चन्द्रमा लग्नबाट प्रथम स्थानमा छ भने त्यो मानिस भाग्यको दुर्बलता र मानसिक चिन्ता पाउनेवाला, बढी उत्साहका साथ व्यापारमा निकै ठूलो दौड-धूप गर्नेवाला, शरीर दुब्लो भएको तथा गृहस्थीको पूरा ख्याल राख्ने खालको र स्त्रीमा र भोगादि पक्षमा मनको विशेष आशक्ति राख्ने भएको तथा व्यापारको सम्बन्धमा मन र भाग्यको तागतले उन्नति गर्ने भएको, धर्मको अपूर्ण पालन गर्नेवाला र भाग्यको उन्नति बर्ता चाहने भए पनि अझ बढी उन्नतिका धेरै-धेरै अवसर पाएर पनि यथार्थ उन्नतिबाट विघ्न-बाधा पाउनेवाला र उच्च भावनाहरूका साथै भएर पनि मनमा दुर्बलता पाउने खालको र दैवगतिमा दिक्क र अफसोस मात्रै खालको होला।

कु० नं० ८७९

९ ७
१० ८चं. ६
११ ५
१२ २ ४
१ ३

जुन व्यक्तिको धनराशिको चन्द्रमा लग्नबाट दोस्रो स्थानमा छ भने त्यो मानिस भाग्यमानी र धेरै धनवान् तथा भाग्यबलको तागतले बढी धनराशि कमाउनेवाला र कुटुम्बको बर्ता आनन्द पाउने खालको र धर्म संग्रह गर्दै रहँदा पनि धर्मको यथार्थ सम्बन्धबाट केही अरूचि झैं भएको, पूर्वसंचित कर्महरूको संस्कारबाट लौकिक सफलता तथा भाग्यको चमत्कारको प्रभाव पाउने भएको एवं ऐश्वर्य भोगनेवाला र आयुमा बुद्धिको योग पाउने खालको र जीवनको दिनचर्यामा गौरव तथा सम्मानको आनन्द अनुभव गर्ने किसिमको र मानसिक विचारहरूको तागतबाट र धर्म बलको तागतबाट धन-वृद्धि गर्ने र बढी धनको इच्छा राख्ने व्यक्ति होला।

कु० नं० ८८०

९चं. ७
१० ८ ६
११ ५
१२ २ ४
१ ३

जुन व्यक्तिको मीन राशिको चन्द्रमा लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस निकै ठूलो बुद्धिमान र विद्यावान एवं दूरदर्शी, तत्त्वज्ञाता र मनोयोगको दैवी शक्ति प्राप्त गर्ने भएको ठूलो भाग्यमानी, धर्मात्मा र सत्यलाई ग्रहण गर्ने भएको र सन्तान पक्षबाट पूरा सहयोग पाउने एवं बुद्धियोग र सात्त्विक मनोयोग द्वारा भाग्योदय पाउने खालको र ईश्वरको भक्ति श्रद्धा मनमा हुने, धर्मको ज्ञान राख्ने भएको, भाग्यको तागतबाट अनेक थरिका राम्रा-राम्रा लाभ पाउने र मीठो वाणी बोल्ने गुणी होला।

कु० नं० ८८३

जुन व्यक्तिको मेष राशिको चन्द्रमा लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस ईश्वरको सम्बन्धमा थोरै श्रद्धा-विश्वास राख्ने खालको र भाग्यको पक्षमा केही न्यूनता पाउने भएको एवं भाग्यको उन्नतिका लागि थेरै समयसम्म चिन्तित रहेर मानसिक कष्ट सहनेवाला, कतिपय झगडा-विवाद आइलाग्ने विघ्न-बाधा र कष्टयुक्त कर्मबाट भाग्य-वृद्धि पाउनेवाला र भाग्यको सम्बन्धमा केही घेरावको झैं योग परेको, खर्चको साधन बढी पाउने र शत्रु पक्षमा केही शान्ति द्वारा सफलता प्राप्त गर्नेवाला, स्वार्थ सिद्धिको लागि न्यायान्यायको वास्ता नगर्ने खालको व्यक्ति होला। मनभित्रका ठूला-ठूला बांगा, बटारिएका युक्तिबाट लाभ पाउने होला।

कु० नं० ८८४

जुन व्यक्तिको मीन राशिको चन्द्रमा लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस निकै ठूलो बुद्धिमान र विद्यावान एवं दूरदर्शी, तत्त्वज्ञाता र मनोयोगको देवी शक्ति प्राप्त गर्ने भएको ठूलो भाग्यमानी, धर्मात्मा र सत्यलाई ग्रहण गर्ने भएको र सन्तान पक्षबाट पूरा सहयोग पाउने एवं बुद्धियोग र सात्त्विक मनोयोग द्वारा भाग्योदय पाउने खालको र ईश्वरको भक्ति श्रद्धा मनमा हुने, धर्मको ज्ञान राख्ने भएको, भाग्यको तागतबाट अनेक थरिका राम्रा-राम्रा लाभ पाउने र मीठो वाणी बोल्ने गुणी होला।

कु० नं० ८८३

| | | |
|---|---|---|
| ९ | | ७ |
| १० | ८ | ६ |
| ११ | | ५ |
| १२ चं. | २ | ४ |
| १ | | ३ |

जुन व्यक्तिको मेष राशिको चन्द्रमा लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस ईश्वरको सम्बन्धमा थोरै श्रद्धा-विश्वास राख्ने खालको र भाग्यको पक्षमा केही न्यूनता पाउने भएको एवं भाग्यको उन्नतिका लागि धेरै समयसम्म चिन्तित रहेर मानसिक कष्ट सहनेवाला, कतिपय झगडा-विवाद आइलाग्ने विघ्न-बाधा र कष्टयुक्त कर्मबाट भाग्य-वृद्धि पाउनेवाला र भाग्यको सम्बन्धमा केही घेरावको झैं योग परेको, खर्चको साधन बढी पाउने र शत्रु पक्षमा केही शान्ति द्वारा सफलता प्राप्त गर्नेवाला, स्वार्थ सिद्धिको लागि न्यायान्यायको वास्ता नगर्ने खालको व्यक्ति होला। मनभित्रका ठूला-ठूला बांगा, बटारिएका युक्तिबाट लाभ पाउने होला।

कु० नं० ८८४

| | | |
|---|---|---|
| ९ | | ७ |
| १० | ८ | ६ |
| ११ | | ५ |
| १२ | २ | ४ |
| १चं. | | ३ |



## सिंह लग्नान्तर- बुधफलम्

जुन व्यक्तिको सिंह राशिको बुध लग्नबाट प्रथम स्थानमा छ भने त्यो मानिस आफ्नै देहद्वारा इच्छित धन कमाउनेवाला, शरीरले नै धनी व्यक्ति मानिने खालको होला। विवेकको महान् शक्तिद्वारा अनेक प्रकारका महान् स्वार्थ-सिद्ध पार्नेवाला, धनको शक्तिले नै दैनिक व्यापारमा बढी सफलता पाउनेवाला र स्त्री स्थानमा महान् लाभ प्राप्त गर्नेवाला, आदर्श शक्तिको द्वारा लौकिक वा भोगादिक पदार्थहरूमा बढी सफलता प्राप्त गर्नेवाला, खुब मान-सम्मान पाउने र शरीरमा सौन्दर्य र शीतलता प्राप्त गर्नेवाला, सदैव धन कताबाट ताव पाइन्छ भन्ने उपाय उत्पन्न गर्ने र ठूलो इज्जतदार एवं बाठो व्यक्ति होला।

कु० नं० ५३७

| | | |
|---|---|---|
| ६ | | ४ |
| ७ | ५बु. | ३ |
| ८ | | २ |
| ९ | ११ | १ |
| १० | | १२ |

जुन व्यक्तिको कन्या राशिको बुध लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस बढी धन संग्रह गर्न जान्ने र धेरै कुटुम्बहरू भएको,अनि जीवनको दिनचर्यामा केही परेशानी र केही उदासीनता एवं केही बेवास्ता, उपेक्षाद्वारा काम गर्ने खालको होला। पुरातत्त्व शक्तिको अवहेलना गर्न नसक्ने र धनको शक्ति प्राप्त गर्नमा महान् अनेकानेक विवेक शक्तिद्वारा काम सिद्ध पार्नेवाला। आमदानीको स्थानमा केही बाधा-बन्धन झैं भएर बाटो पाउनेवाला, धेरै ठूलो मान-इज्जत कमाउनेवाला, धनको वृद्धिका कारणहरूले आयुको समयको नीरसता युक्त उपेक्षाले राख्ने खालको होला।

कु० नं० ५३८

| | | |
|---|---|---|
| ६बु. | | ४ |
| ७ | ५ | ३ |
| ८ | | २ |
| ९ | ११ | १ |
| १० | | १२ |

जुन व्यक्तिको मेष राशिको मंगल लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस भाग्य स्थानमा अनेक सुख र उन्नति प्राप्त गर्ने खालको होला। अनि माता-पिताको वैभव प्राप्त गर्नेवाला, पैतृक सम्पत्ति भवन-भूमि आदिको सुरक्षा गर्नेवाला। धर्म-कर्ममा श्रद्धा र विश्वास राख्नेवाला, राज-समाजमा अनेक उपहार र धनादि प्राप्त गर्ने खालको बलियो विचार राख्ने खालको होला। मान प्रतिष्ठा र यश प्राप्त गर्नेवाला, सन्तान पक्षबाट सुख-शान्ति पाउनेवाला होला।

कु० नं० ५३३

६ ४
७ ५ ३
८ २
९ ११ १मं.
१० १२

जुन व्यक्तिको वृष राशिको मंगल लग्नबाट दसम स्थानमा छ भने त्यो मानिस बढी व्यापारिक शक्ति प्राप्त गर्नेवाला, निकै ठूलो भाग्यमानीमा गनिने खालको होला। भूमि-भवन आदिको महान् शक्तिको आनन्द प्राप्त गर्नेवाला तथा माताको स्थानमा अपार आनन्द पाउनेवाला तथा सुख-शान्ति सम्बन्धित विषयमा धेरै ठूलो सहायक साधन प्राप्त गर्नेवाला, अन्यान्य बाहिरी स्थानहरूमा केही त्रुटि केही उदासीनताको योग पाउनेवाला र धर्मको राम्ररी पालन गर्न जान्नेवाला तथा ईश्वरमा अटल विश्वास भएको व्यक्ति होला। ठूलो कीर्ति पाउनेवाला र भाग्यको भरमा नै मोज गर्नेवाला तथा ठूलो मान-सम्मान प्राप्त गर्ने खालको व्यक्ति होला।

कु० नं० ५३४

६ ४
७ ५ ३
८ २मं.
९ ११ १
१० १२

जुन व्यक्तिको मिथुन राशिको मंगल एघारौं स्थानमा छ भने त्यो मानिस आफ्नू भाग्यको शक्तिद्वारा सुखपूर्वक इच्छित लाभ प्राप्त गर्ने खालको होला। धनको संग्रह गर्नमा केही दैवी सहायता पाउनेवाला, माताको स्थानबाट इच्छित लाभ प्राप्त गर्ने खालको होला। सुख-शान्तिका अनेक साधन पाई प्रसन्न रहनेवाला, भूमि-भवन आदिको लाभ कमाउनेवाला र शत्रु स्थानमा महान् यश र प्रभाव पाउनेवाला, मावली पक्षमा केही महानताको योग परेको होला। कुटुम्बको सुख-शान्ति देखेर प्रसन्न रहने वाला, अनि वृद्धि स्थानमा र विद्या स्थानमा निकै बुद्धिमानीले आफ्नू काम सिद्ध पार्नेवाला। सन्तानको लाभ र सुख आंशिक रूपमा पाउने खालको होला। पुनर्जन्मका पुण्यहरूको शक्तिले ठूला-ठूला लाभ र अनेक थरिका साना-ठूला सफलताहरू प्राप्त गर्नेवाला, धर्मलाई मात्रै भए पनि भित्री मनमा स्वार्थभाव गडेको व्यक्ति होला।

कु० नं० ५३५

६ ४
७ ५ ३मं.
८ २
९ ११ १
१० १२

जुन व्यक्तिको कर्क राशिको मंगल लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस आफ्नू भाग्यस्थानमा महान् न्यूनता दुर्बलता पाउने खालको तथा मातृस्थानमा निकै ठूलो हानि पाउने र सुख एवं शान्तिमा महान् न्यूनता र कमजोरी प्राप्त गर्नेवाला र निवासस्थानको र भूमि-भवन आदिमा ठूलो हानि पाउनेवाला र बाहिरी अन्यान्य स्थानहरूको योगले ठूला अशान्तिद्वारा आफ्नू बल र पुरुषार्थको वृद्धि गर्नेवाला र खर्चको स्थानमा ठूलो अशान्तिले गर्दा पाउने कष्ट तथा धर्मको सम्बन्धमा धेरै ठूलो दुर्बलता प्राप्त गर्नेवाला र बाहिरी अन्यान्य स्थानहरूको योगले दैनिक व्यापारमा इच्छित उन्नति गर्ने र ठूलो यश प्राप्त गर्नेवाला, र बाहिरी अन्यान्य स्थानहरूको योगले दैनिक व्यापारमा इच्छित उन्नति गर्ने र ठूलो यश प्राप्त गर्नेवाला तथा शत्रु स्थानमा निकै प्रभाव पाउने खालको व्यक्ति होला।

कु० नं० ५३६

६ ४मं.
७ ५ ३
८ २
९ ११ १
१० १२

जुन व्यक्तिको धन राशिको मंगल लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस सुख सन्तोषपूर्वक विद्या ग्रहण गर्नेवाला तथा सन्तानको सुख प्राप्त गर्नेवाला र विद्या बुद्धिको स्थानबाट भाग्यको उन्नति र सुख सन्तोष प्राप्त गर्नेवाला र भूमि-भवनको सुख पाउनेवाला अनि सुखपूर्वक लाभ प्राप्त गर्नेवाला, जीवनको दिनचर्यामा भाग्य-शक्तिको गौरव अनुभव गर्नेवाला, भाग्यको सुख-शक्तिको तर्फबाट बाहिरी स्थानहरूमा केही न्यूनताको योग परेको होला। व्यय स्थानमा केही कमी अनुभव गर्नेवाला, वृद्धिको भित्र कोमलता राख्नेवाला, आमाका गुणहरू ग्रहण गर्ने खालको होला। शान्तिको इच्छा गर्ने र आयुको सुख प्राप्त गर्नेवाला, धर्मलाई राम्ररी जान्नेवाला तथा वाणीद्वारा सज्जनताको पालन गर्नेवाला गूढ ज्ञानी व्यक्ति होला।

कु० नं० ५२९

६ ४
७ ५ ३
८ २
९मं. ११ १
१० १२

जुन व्यक्तिको मकर राशिको मंगल लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस भाग्यको शक्तिद्वारा प्रभावको महान् उन्नति प्राप्त गर्नेवाला तथा सत्वगुणी शक्तिद्वारा शत्रुलाई पराजित गर्न जान्ने र तमोगुणी धर्मको पालन गर्नेवाला। मावली पक्षबाट महानता पाउनेवाला, मातृ-सुखमा केही न्यूनता देख्नेवाला, सुख-शान्तिमा बाधा अनुभव गर्ने खालको होला। केही भवन-भूमि आदिको शक्ति भएको तथा भाग्योन्नतिको स्थानमा केही विघ्न-बाधा र झ्याउलाहरू सहन परे पनि वृद्धितिर बराबर लम्किरहनेवाला, भाग्योन्नतिको स्थानमा केही परिश्रमको अधिकता र दैवी सहायताको सम्मिश्रण योग पाउनेवाला तथा धन-व्ययमा कमीको योग परेको र देहमा केही भाग्यद्वारा सम्मानको योग प्राप्त गर्नेवाला, धर्मको आडमा केही अनुचित उन्नति पाउने खालको व्यक्ति होला।

कु० नं० ५३०

६ ४
७ ५ ३
८ २
९ ११ १
१०मं. १२

जुन व्यक्तिको कुम्भ राशिको मंगल लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस आमाको पक्षमा, स्त्री पक्षमा केही नीरसतायुक्त सुखको योग परेको होला। घरेलू सुखको घेरामा सुखयुक्त भएर पनि केही असन्तोष मात्रेवाला र दैनिक व्यापारको स्थानमा अलिकति परिश्रम गरेर पनि सफलता प्राप्त गर्नेवाला, केही भवन-भूमि आदिको सुख प्राप्त गर्नेवाला, उन्नति प्राप्त गर्नका निम्ति धेरै प्रयत्न गर्ने, भाग्यको तागतद्वारा केही धनको शक्ति प्राप्त गर्नेवाला, केही सामान्य धर्मको पालन गर्नेवाला र गृहस्थीको प्रत्येक दैनिक कार्यहरूमा केही धर्मको ख्याल राख्नेवाला, भोगादिको प्राप्तिका लागि केही धर्मको हानि पाउने खालको मानयुक्त होला।

कु० नं० ५३१

६ ४
७ ५ ३
८ २
९ ११मं. १
१० १२

जुन व्यक्तिको मीन राशिको मंगल लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस भाग्यको स्थानमा ठूला-ठूला कष्ट सहनेवाला, धर्मको हानि पाउने भएको, सुख-शान्तिमा अनेक बाधाहरू पाउनेवाला, माताको स्थानमा न्यूनता र कष्ट सहनेवाला, भवन-भूमि आदि निवास स्थानको पनि न्यूनता मातृ-भूमिको भित्र पाउनेवाला यश प्राप्तिमा पनि न्यूनता पाउनेवाला तथा अन्य शहरहरूको योगले सुख प्राप्त गर्नेवाला तथा अन्य स्थानहरूको योगले नै भाग्यको वृद्धिको योग पाउनेवाला, भाग्यको उन्नतिका लागि ठूला-ठूला सुखहरूको आहुति दिने खालको होला। जीवनमा सहायक हुने कुनै पुरातत्त्व शक्तिको भर पाउनेवाला र आयुमा वृद्धि पाउने खालको व्यक्ति होला।

कु० नं० ५३२

६ ४
७ ५ ३
८ २
९ ११ १
१० १२मं.

# सिंह लग्नान्तर-भौमफलम्

जुन व्यक्तिको सिंह राशिका मंगल लग्नबाट पहिलो स्थानमा छ भने त्यो मानिस भाग्यको शक्तिद्वारा ठूलो मान र भूमि-भवन सम्बन्दी महान् शक्ति प्राप्त गर्ने भएको र भूमि-भवनद्वारा नै ठूलो भाग्यमानीमा गनिने तथा आमाको शक्ति र आमाकै आदर्श प्राप्त गरेर सुख प्राप्तिका अनेक उच्च साधनहरू एवं प्रभाव प्राप्त गर्नेवाला र यथा-शक्ति धर्मको सम्बन्धलाई वर्तमानमा पालन र ध्यान गर्नेखालको होला। पूर्वसंचित धर्मको बलद्वारा धेरै प्रकारका आशाहरू र अनेक थरिका सुख-सुविस्ता पाउनेवाला, शरीरलाई सुन्दर र सुखद राख्न जान्ने तथा जीवनको दिनचर्यामा ठूलो गौरव मान्नेवाला, स्त्री र गृहस्थी एवं व्यापारको स्थानमा नीरसताको योग पाउनेवाला, पुरातत्त्वले सुखी र धन-धान्यपूर्ण रहने व्यक्ति होला।

कु० नं० ५२५

६　４　५मं.　७　३　८　२　९　११　१　१०　१२

जुन व्यक्तिको कन्या राशिको मगंल लग्नबाट दोस्रो स्थानमा छ भने त्यो मानिस ठूलो भाग्यमानी तथा भाग्यको शक्तिले दैवी सम्पत्तिको वृद्धि प्राप्त गर्ने खालको होला। धनको शक्तिले ठूलो भाग्यमानीमा गनिने तथा भवन-भूमि बेसरी प्राप्त गर्नेवाला र स्वार्थयुक्त भएर धर्मको पालन गर्नेवाला, पूर्वसंचित धन-धर्मको बलले तथा धनको संचित शक्तिको योग पाउनेवाला, अनि आमाको पक्षमा वा घरेलू सुखको स्थानमा केही कष्ट आइलागेको मनमा ठान्नेवाला, कौटुम्बिक शक्तिको पाउनेवाला तथा यथेच्छ सन्तान सुख प्राप्त गर्नेवाला, विद्या-बुद्धिको स्थानमा सज्जनता धारण गर्ने तथा कुराकानीमा सत्यता र गम्भीरताको योग परेको व्यक्ति होला।

कु० नं० ५२६

६मं.　४　५　७　३　८　२　९　११　१　१०　१२

जुन व्यक्तिको तुला राशिको मंगल लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस ठूलो सौभाग्य प्राप्त गर्ने भाग्यमानी एवं पुरुषार्थको शक्तिले र आफ्नू बाहुबलद्वारा धेरै ठूलो सफलता प्राप्त गर्नेवाला, दैवी सहायताहरूको द्वारा निकै सजिलोसित उन्नतिको मार्गमा अग्रसर हुँदै जानेवाला, यश र प्रभावको शक्ति वृद्धि प्राप्त गर्नेवाला तथा धर्मलाई मान्नेवाला, शत्रुस्थानमा महान् प्रभाव पाउनेवाला, अनि मावली पक्षमा केही गौरव र सुख भएको देख्नेवाला तथा पिताको स्थानमा केही नीरसता पाउनेवाला र राज-समाज एवं मानोन्नतिको स्थानमा केही बाधाहरूको साथै वृद्धिको योग परेको र रोग-दोष एवं झ्याउलाहरूको अलिकति पनि भय वा वास्ता नगर्नेवाला, निकै ठूलो साहस भएको, आमा र भाइ-बहिनीको शक्तिपाउने प्रभावशाली होला।

कु० नं० ५२७

६ ४
७मं. ५ ३
८ २
९ ११ १
१० १२

.जुन व्यक्तिको वृश्चिक राशिको मंगल लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस भूमि-भवनको स्वामी र शक्ति पाउने भएको, ठूलो भाग्यमानी-मा गनिनेवाला, गम्भीर सुख-शक्ति प्राप्त गर्नेवाला र रोजगार-व्यापारको बाटोमा केही नीरसता अनुभव गर्ने खालको होला। आमाको स्थानबाट महानता र सुख पाउनेवाला। राज-समाज र लौकिक कार्यहरूमा तथा मान वृद्धिको योग पाउनेवाला र कतिपय स्थितिमा असन्तोष मात्रै खालको होला। भाग्यबल र स्थानबलद्वारा प्रसस्त लाभ पाउनेवाला, ईश्वरप्रति गम्भीर विश्वास भएको र धर्मको राम्ररी पालन गर्नेवाला तथा स्त्री र पिताको स्थानमा केही नीरसताको योग पाउने तथा सुख-प्राप्तिको आनन्दमा मग्न रहने खालको होला।

कु० नं० ५२८

६ ४
७ ५ ३
८मं. २
९ ११ १
१० १२

जुन व्यक्तिको मेष राशिका चन्द्रमा लग्नबाट नवम स्थानमा छ भने त्यो मानिस भाग्यको तागतले खर्च संचालनको शक्ति प्राप्त गर्नेवाला तर भाग्यको सम्बन्धमा केही कमजोरीको योग परेको होला। धर्ममा केही न्यूनताको योग पाउनेवाला, ईश्वरको निष्ठमा पनि केही भ्रमात्मक विचारहरूलाई मनमा राख्नेवाला, यशमा कमी भएको होला। अन्यान्य स्थानको सम्बन्धबाट लाभ पाउनेवाला, केही दैवी सहायता पाउनेवाला तथा मनभित्र केही शान्ति र केही अशान्ति मिश्रित योग परेको होला। दाजु-भाई र दिदी-बहिनीको स्थानमा न्यूनता देख्नेवाला र बल-पुरुषार्थमा पनि केही कमजोरी अनुभव गर्ने खालको व्यक्ति होला।

कु० नं० ५२१

५ ४ ३ १चं. १२ ११ १० ९ ८ ७ ६ २

जुन व्यक्तिको वृषराशिका चन्द्रमा लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस बाहिरी स्थानहरूको सम्पर्क शक्तिले मनोयोगले ठूलो व्यापार गर्नेवाला, स्थानीय व्यापारमा धेरै हानिहरूको योग परेको होला। पिताको स्थानमा, बाहिरी सम्बन्धको शक्ति तथा स्थानीय स्थितिमा केही दुर्बलता र आंशिक हानिको योग पाउनेवाला, मातृस्थानमा पनि केही हानि पाउनेवाला तथा भूमि-भवन आदिमा पनि केही न्यूनता पाउनेवाला, मनको सुख-शान्तिमा पनि निकै दुर्बलता पाउनेवाला र धेरै बढी शाही काइदाको खर्च गर्न अघिसर्नेवाला तथा राज-समाज र प्रतिष्ठाको स्थानमा खर्चको शक्तिले देखावटी प्रभावको शक्ति भेट्टाउने खालको होला। वास्तविक उन्नतिमा न्यूनता पाउनेवाला, मनमा प्रसन्न रहने र ठूला-ठूला उल्टो-सोझो कामले आफ्नू काम चलाउने खालको होला।

कु० नं० ५२२

५ ४ ३ २चं. १ १२ ११ १० ९ ८ ७ ६

जुन व्यक्तिको मिथुन राशिको चन्द्रमा लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस बाहिरी स्थानहरूको सम्बन्धबाट मनोयोगद्वारा ठूलो लाभ पाउनेवाला र खर्चको शक्तिले पनि धन कमाउन सक्नेवाला तथा खूब खर्च गर्ने शक्ति पाउनेवाला तथा लाभ प्राप्तिको स्थानमा दुर्बलता अनुभव गर्नेवाला र सन्तान पक्षमा केही विरोध र कमजोरी पाउनेवाला र विद्या ग्रहण गर्नमा पनि न्यूनता पाउनेवाला, अनि मन र बुद्धि भित्र ठूलो उल्टा-सीधा कुराहरू विचारि रहनेवाला तथा आफ्नो आवश्यकताका प्रयोग गरिने वस्तुहरूमा केही बाधा र कमी अनुभव गर्नेवाला अनि मनमा केही भित्री दुर्बलता र बाहिरी प्रसन्नताको योग पाउने खालको व्यक्ति होला।

कु० नं० ५२३

६ ४
७ ५ ३चं.
८ २
९ ११ १
१० १२

जुन व्यक्तिको कर्क राशिका चन्द्रमा लग्नबाट बार्हौं स्थानमा छ भने त्यो मानिस धेरै धाराप्रवाह धन खर्च गर्नमा नै मनलगाउनेवाला र खूब बढी खर्च गर्ने खालको होला। बाहिरी सम्बन्धहरूको महान् शक्ति प्राप्त गर्नेवाला, तथा बाहिरी सम्बन्धमा नै मनभित्र बढी हर्ष मान्नेवाला र प्रसन्नताको योग पाउनेवाला। खर्च स्थानमा ठूलो गौरव र चमत्कार राख्ने खालको तथा खर्चलाई रोक्ने शक्तिमा असमर्थता पाउनेवाला, मावली पक्षबाट केही हानि वा कमजोरीको योग पाउनेवाला, शत्रु स्थानमा केही नरम भएर पनि काम सिद्ध पार्नेवाला, केही अशान्ति युक्त र बलियो मन भएको होला।

कु० नं० ५२४

६ ४चं.
७ ५ ३
८ २
९ ११ १
१० १२

जुन व्यक्तिको धन राशिको चन्द्रमा लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस बाहिरी अन्य स्थानहरूसित सम्बन्धित मन र बुद्धिद्वारा खर्चको संचालन शक्ति राख्ने खालको होला र सन्तान पक्षमा हानि वा कमजोरी पाउनेवाला र केही भ्रमित हुने भएको र केही मनोयोग द्वारा अनर्गल प्रलाप गर्नेहरूलाई पनि भ्रमित पार्न सक्ने क्षमता भएको तथा दिमागमा लाभ र हानि सम्बन्धी अनेक झ्याउलाहरू अनुभव गरेर चिन्तित रहनेवाला, तथा लाभ प्राप्तिको स्थानमा केही कमजोरी पाउनेवाला र धेरै ठूला विचारहरूको सोध-खोजमा अलमलिनेवाला, वास्तविक पाउनेपर्ने भन्दा थोरै पाउनेवाला तथा परसम्मको विचार गर्ने खालको होला।

कु० नं० ५१७

६ ४
७ ५ ३
८ २
९चं. ११ १
१० १२

जुन व्यक्तिको मकर राशिको चन्द्रमा लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस व्ययको स्थानमा केही परतन्त्रता झैं अनुभव गर्ने र मनभित्र महान् घेराव र बन्धन झैं योग पाउनेवाला र मनको शक्तिद्वारा बाहिरी स्थानहरूसित सम्बन्धित, अपठेरो मामलाहरूको हल गर्नमा मनमा थकाईको अनुभव गर्नेवाला तथा खर्चलाई रोक्ने वा कम गर्नका लागि कोशिश गरेर पनि झन् बढी व्यय गर्ने भएको, अनि शत्रु स्थानमा निकै नरम भएर र शान्तिले आफ्नू काम सिद्ध पार्नेवाला र मावली पक्षमा हानिको योग परेको तथा केही रोगादि झ्याउलाहरूको विषयमा पनि खर्च गर्ने खालको, आफ्नू प्रभावमा केही न्यूनता अनुभव गर्ने र शत्रुलाई हानि पुऱ्याउने खालको होला।

कु० नं० ५१८

६ ४
७ ५ ३
८ २
९ ११ १
१०चं. १२

जुन व्यक्तिको कुम्भ राशिको चन्द्रमा लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस आफ्नू गृहस्थी र स्त्रीको स्थानबाट हानि तथा दुर्बलता

कु० नं० ५१९

६ ४
७ ५ ३
८ २
९ ११चं. १
१० १२

पाउनेवाला र अन्यान्य बाहिरी स्थानहरूसित सम्बन्धित दैनिक व्यापार चलाउनेवाला तथा स्थानीय रोजगारमा हानि पाउनेवाला र इन्द्रिय भोगादिक सुखहरू मा कमजोरी पाउनेवाला र बाहिरी सम्बन्धहरू द्वारा भोग प्राप्त गर्ने मनमा इच्छा राख्ने खालको होला। शरीरमा केही न्यूनता र दुर्बलता पाउनेवाला, दैनिक व्यापार भित्र मनको शक्तिले ठूला-ठूला उल्टो-सुल्टो गर्नका लागि उपाय सोचिरहनेवाला, भोगादिक पक्षमा र गृहस्थीको पक्षमा अधिकांश व्यय गर्न अघिसर्नेवाला, केही चिन्ताग्रस्त रहने र दैनिक कार्यहरूमा केही कमजोरी पाउने खालको व्यक्ति होला।

जुन व्यक्तिको मीन राशिका चन्द्रमा लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस खर्चको संचालन शक्तिलाई अन्यान्य स्थानहरूको योगले तथा

कु० नं० ५२०

६ ४
७ ५ ३
८ २
९ ११ १
१० १२चं.

मानसिक परिश्रमद्वारा प्राप्त गर्न सफल हुनेवाला, खर्चको केही कमी र केही झ्याउलो पाउनेवाला, जीवनको दिनचर्यामा अलिकति अभाव झैं अनुभव गर्नेवाला, जीवनमा सहायक हुने खालको केही पूर्वसंचित शक्तिको न्यूनता भेट्टाउने खालको होला। अनि बाहिरी स्थानहरूबाट सम्बन्धित गूढ विषयको ज्ञान मनभित्र प्राप्त गर्नेवाला, बाहिरी सम्बन्धहरूको शक्तिले मनद्वारा धनको वृद्धि गर्ने सदैव उद्योग गरिरहनेवाला, धनको ढुकुटीमा केही न्यूनताको पनि अनुभव गर्ने खालको होला। जीवनमा सहायक हुने मुख्य शक्ति ढीलो गरेर प्राप्त गर्नेवाला, आयुको वृद्धिमा केही न्यूनता पाउने र केही चिन्तित मनको होला।

# सिंह लग्नान्तर-चन्द्रफलम्

जुन व्यक्तिको सिंहराशिको चन्द्रमा लग्नको प्रथम स्थानमा छ भने त्यो मानिस बाहिरी अन्य स्थानहरूको सम्पर्क शक्ति राख्नेवाला, केही भ्रमण गर्ने खालको र शरीरमा केही दुर्बलता पाउने भएको तथा देहको वास्तविक सौन्दर्यमा कमी पाउनेवाला, मनको भित्र केही शक्ति वा केही कमजोरीको सम्मिश्रण योग पाउनेवाला, शानदार प्रभावशाली धन व्यय गर्नेवाला, स्त्री स्थानको बाहिरी सम्बन्धमा खर्च गर्ने र देहको तागतले खर्चको शक्ति प्राप्त गर्नेवाला, दैनिक व्यापार र स्त्री स्थानमा न्यूनताको योग अनुभव गर्ने खालको तथा अन्य स्थानहरूको सम्बन्धमा मन-द्वारा धेरै प्रकारका शक्ति प्राप्त गर्नेवाला, केही दुर्बल मनभ्रमित खालको होला।

कु० नं० ५१३

६ ४
७ ५चं. ३
८ २
९ ११ १
१० १२

जुन व्यक्तिको कन्या राशिका चन्द्रमा लग्नबाट दोस्रो स्थानमा छ भने त्यो मानिस धन संग्रह गर्ने कोषको स्थानमा केही हानि र केही न्यूनता पाउनेवाला तथा कुटुम्बमा केही हानि पाउनेवाला र अन्य स्थानहरूसित सम्बन्धित मनोयोगको शक्तिद्वारा धनको वृद्धि गर्ने साधन पाउनेवाला र खर्चको शक्तिलाई वन्दिशमा ल्याएर धन जोर्ने (वृद्धि) गर्ने चेष्टा गर्नाले संचित धनमा कहिले काहीं बढी व्यय भएर जाने योग परेको होला। जीवनको पूर्व सहायक पुरातत्त्व शक्तिमा पनि केही हानि पाउने खालको र जीवनको दिनचर्यामा केही धन-व्ययको उज्जवलता पाउने भएको तथा केही फोस्रो धनाढ्यको योग पाउने खालको होला।

कु० नं० ५१४

६चं. ४
७ ५ ३
८ २
९ ११ १
१० १२

जुन व्यक्तिको तुला राशिका चन्द्रमा लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस आफ्नू मनको भित्र-बाहिरी अन्य स्थानहरूको सम्बन्धितको बल प्राप्त गर्ने खालको होला। स्थानीय बाहुबलको शक्तिमा न्यूनता पाउनेवाला तथा दाजु-भाई र दिदी-बहिनीको स्थानमा कमजोरी र हानिहरूको योग पाउनेवाला। भाइ बहिनीको पक्षमा र पुरुषार्थको वृद्धिको सम्बन्धमा बढी खर्च गर्नेवाला, मनभित्र केही दुर्बलता एवं शक्तिको समीकरण योग पाउनेवाला तथा धर्म र भाग्यको स्थानमा पनि केही न्यूनता अनुभव गर्नेवाला र बर्ता धन व्ययले गर्दा पुरुषार्थ बलमा दुर्बलता अनुभव गर्नेवाला, शान्तियुक्त पुरुषार्थ गर्ने खालको व्यक्ति होला।

कु० नं० ५१५

६ ४
७चं. ५ ३
८ २
९ ११ १
१० १२

जुन व्यक्तिको वृश्चिक राशिका चन्द्रमा लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस मातृस्थानमा महान् त्रुटि र दुर्बलता पाउनेवाला, सुख-शान्तिमा अनेक बाधा पाउनेवाला र मनोयोगका महान् अशान्तिप्रद कार्यहरूद्वारा खर्चको शक्ति प्राप्त गर्ने खालको होला। संकीर्ण रूपले खर्च गर्ने कारणहरूले केही कष्ट र अशान्तिको योग पाउनेवाला र बाहिरी अन्य सम्बन्धबाट मनोयोगको परिश्रमद्वारा अनेक कष्टहरू सहेर इज्जत र मान-प्रतिष्ठाको वृद्धि गर्ने खालको तथा भवन-भूमिको कमी र हानि पाउनेवाला। पिता समान कुनै अन्य व्यक्तिको सहयोग पाउनेवाला, घरभित्र नै अनेक थरिका मानसिक र शारीरिक कष्ट सहन सक्ने खालको होला।

कु० नं० ५१६

६ ४
७ ५ ३
८चं. २
९ ११ १
१० १२

जुन व्यक्तिको मेष राशिको सूर्य लग्नबाट नवम स्थानमा छ भने त्यो मानिस ठूलो भाग्यमानी झैं शक्ति प्राप्त गर्नेवाला, निकै बर्ता सौन्दर्य पाउने भएको र चाक्लो लामो मस्तक भएको दाजु-भाई-दिदी-बहिनीको केही वास्ता नराख्ने भएको, धर्मको विशेष ज्ञान तथा विशेष पालन गर्नेवाला र आफ्नू प्रभावको महान् शक्ति राख्नेवाला तथा धेरै ठूला-ठूला मान-सम्मान प्राप्त गर्नेवाला र धेरै यश कमाउनेवाला तथा धार्मिक स्थानमा ठूलो बनेर रहने ख्यालको तथा भाग्यको शक्तिको भरबाट आनन्द र निस्फिक्रीको योग पाउनेवाला अनि आत्मज्ञान र आत्मीयताको महान शक्ति राख्ने भएको तथा परोपकारी कार्यको काम गर्नेवाला र केही प्रसिद्धताको योग पाउनेवाला व्यक्ति होला।

कु० नं० ५०९

६ ४
७ ५ ३
८ २
९ ११ १सू.
१० १२

जुन व्यक्तिको वृष राशिका सूर्य लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस ठूलो प्रतापको शक्ति राख्नेवाला तथा धेरै मान-प्रतिष्ठा पाउनेवाला र सुख स्थानको वृद्धिमा पूरा ध्यान दिनेवाला र प्रयत्न गर्दै रहनेवाला, अनि पिताको स्थानमा केही नीरसताले युक्त सम्बन्ध पाउनेवाला र निकै ठूलो 'म' भन्ने अभिमानपूर्वक रहनेवाला र माताको स्थानमा विशेष माया गर्नेवाला र व्यापार आदिको देह शक्तिको द्वारा खूब काम गर्नेवाला र राज-समाजको सम्बन्धमा निकै प्रयत्न गर्नेवाला, भूमि-भवनको वृद्धिमा ख्याल राख्नेवाला, निकै स्वाभिमानी व्यक्ति होला।

कु० नं० ५१०

६ ४
७ ५ ३
८ २सू.
९ ११ १
१० १२

जुन व्यक्तिको मिथुनराशिको सूर्य लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस धेरै ठूलो लाभ प्राप्त गर्नेवाला, तथा धेरै ठूलो सम्पत्तिको पनि आमदानी प्राप्त गर्नेवाला र बढीभन्दा पनि बढी लाभ र नाफा खाने प्रयत्न गर्नेवाला, शरीरलाई शक्तिशाली तुल्याउने पनि कोशिश गर्नेवाला, सन्तान शक्ति प्राप्त गर्नेवाला तथा विद्या ग्रहण गर्नमा अग्रणी र प्रभावपूर्ण भाषा र वाणीमा बोल्न सक्ने खालको र शरीरमा ठूलो प्रभाव पाउनेवाला तथा त्यही प्रभावको शक्तिले नै धेरै र अनेक थरिका धनलाभ तथा अनेक पदार्थ पाउने दूरदर्शी व्यक्ति होला।

कु० नं० ५११

६ ४
७ ५ ३सू.
८ २
९ ११ १
१० १२

जुन व्यक्तिको कर्क राशिको सूर्य लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस केही दुर्बल शरीरको तथा बाहिरी अन्य स्थानहरूमा बस्नेवाला तथा हृदयमा केही बढी दुर्बलता पाउने खालको र धेरै धन खर्च गर्नेवाला र शत्रु स्थानलाई निकै तीक्ष्ण दृष्टिले हेर्ने भएको तथा अनेक प्रकारका झ्याउला र अपठेराहरूबाट आफूलाई सुरक्षित जोगाउने साधन विचार्ने र राख्नेवाला, आफ्नो प्रभाव कायम राख्ने निकै ठूलो प्रयत्न तथा ध्यान राख्नेवाला, अन्य स्थानमा ठूलो प्रभाव जमाउने खालको अनि आत्माभित्र केही एक्लोभाव अनुभव गर्नेवाला र देहको सम्बन्धमा केही अशान्ति र केही भ्रमणको शक्ति राख्नेवाला तथा आफ्नू शरीरमा केही सौन्दर्यको न्यूनता अनुभव गर्ने खालको होला।

कु० नं० ५१२

६ ४सू.
७ ५ ३
८ २
९ ११ १
१० १२

जुन व्यक्तिको वृषराशिको चन्द्रमा लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस आफ्नू भाग्यको बल्दो वा चम्किरहेको चमत्कार स्पष्ट देखनेवाला,

कु० नं० ८८५

९ ७ १० ८ ६ ११ ५ १२ २चं. ४ १ ३

तथा भाग्य शक्ति द्वारा अनेक थरिका राम्रा-राम्रा योग प्राप्त गर्ने भएको तथा स्त्री स्थानमा बढी शान्ति, सुख र फाइदा पाउनेवाला र व्यापारमा बढी लाभ कमाउने भएको र भाग्यबलबाट मनोयोग द्वारा लौकिक उन्नतिको र लौकिक आनन्दको उत्तम योग पाउने खालको, धर्मको सम्बन्धमा विशेष रूचि राख्ने भए पनि सामान्य रूपमा पालन गर्ने भएको र व्यापार एवं गृहस्थीको उन्नतिका लागि धर्मकार्यको यथा सम्भव विशेष पालन गर्ने खालको, शरीरमा केही दुर्बलता र मनमा उमंग उत्साह पाउने व्यक्ति होला।

जुन व्यक्तिको मिथुन राशिको चन्द्रमा लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस भाग्यको दुर्बलताबाट मानिसक कष्ट सहने भएको, भाग्यको

कु० नं० ८८६

९ ७ १० ८ ६ ११ ५ १२ २ ४ १ ३चं.

उन्नतिका लागि ठूला-ठूला विघ्न-बाधा खप्न सक्ने तथा विदेशादिमा एवं विपत्तीहरूमा भाग्यबलको शक्तिबाट गूढ युक्तिहरू द्वारा प्राप्त गर्ने र धनको वृद्धिको लागि अनेक मानसिक चिन्तन गरिरहने खालको र कहिले काहीं अपयश पनि भेट्टाउने भएको अनि धर्मको हानि गर्नेवाला तथा पुरातत्त्वको अनायास लाभ पाउनेवाला र लामू आयुष्य पाउनेवाला तथा भाग्य वृद्धिका लागि मनोयोगको निकै गहीरो युक्तिहरू विचार्ने भएको र ईश्वरको भरमा रहन नमान्ने भएको र धन प्राप्तिको लागि न्याय-अन्यायको वास्ता नगर्ने खालको व्यक्ति होला।

जुन व्यक्तिको कर्क राशिको चन्द्रमा लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस ठूलो भाग्यशाली र यश प्राप्त गर्नेवाला र धर्मको निकै उत्तम

कु० नं० ८८७

९ ७
१० ८ ६
११ ५
१२ २ ४चं.
१ ३

काइदाले पालन गर्ने भएको तथा ईश्वरको श्रद्धा भक्तिमा बढी तत्परता देखाउनेवाला, बढी स्थिरताले प्रसन्न चित्त रहने भएको र न्यायलाई प्रधान मान्ने, ईश्वरमा पूरा भरोसा राख्ने भएको वा धार्मिक योजनाहरूबाट भाग्य-वृद्धि पाउने खालको तथा मनोयोग शक्तिको बढी फाइदा प्राप्त गर्नेवाला र बर्ता गहीरो एवं परस्म्मको सोच-विस्तार गर्नेवाला, दैवीयोगको चमत्कारबाट आनन्द पाउनेवाला, पुरुषार्थ र भक्तिको सहयोगद्वारा सफलता पाउने भएको आनन्दी प्राणी होला।

जुन व्यक्तिको सिंह राशिको चन्द्रमा लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस निकै प्रभावशाली र राज्य-सुखको आनन्द स्वतः प्राप्त

कु० नं० ८८८

९ ७
१० ८ ६
११ ५चं.
१२ २ ४
१ ३

गर्नेवाला, धर्म-कर्मलाई मान्ने भएको, पिता स्थानबाट र मनोयोगबाट भाग्य-वृद्धि प्राप्त गर्नेवाला, अनेक थरिका राम्रा-राम्रा कर्म र सुन्दर व्यापार गर्ने भएको, आफ्नू भाग्यबलद्वारा धेरै सम्मान पाउने खालको र धेरै वैभवशाली तथा बढी सन्तान भएको र कुनै उच्च शानदार धर्मको पालन गर्ने भएको एवं लौकिक र पारलौकिक दुवै धर्महरूको विशेष ध्यान राख्ने भएको, ठूलो यशस्वी तथा प्रतापी र मातृस्थानको सहायता पाउने भएको व्यक्ति होला।

जुन व्यक्तिको कन्याराशिको चन्द्रमा लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस भाग्य शक्तिको बलबाट धेरै थरिका राम्रा-राम्रा दिव्य लाभ पाउने भएको र आमदानीको तर्फबाट निःफिक्री रहने खालको र धर्मको राम्ररी पालन गर्ने भएको र धर्मको पंक्तिबाट वा धार्मिक विचारहरूबाट लाभ पाउने किसिमको तथा खूब धन कमाउने भएको, विद्या स्थानलाई सुचारू रूप दिएर व्यवहारमा ल्याउन जान्ने र सत्यको सदैव ध्यान राख्नेवाला एवं सन्तानसुख प्राप्त गर्ने भएको, दैवयोगद्वारा अनेक विद्याहरूको तथा वस्तुहरूको लाभ पाउने खालको, आफ्नू शील स्वभावले पनि फाइदा पाउने भएको भाग्यमानी र दयालु व्यक्ति होला।

कु० नं० ८८९

९ ७
१० ८ ६चं.
११ ५
१२ २ ४
१ ३

जुन व्यक्तिको तुला राशिको चन्द्रमा लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस भाग्यको दुर्बलता पाउनेवाला, अन्य स्थानबाट भाग्यको सहयोग पाउने भएको र बढी खर्चको योग पाउनेवाला भाग्यमा यशको न्यूनता पाउने भएको, धर्मको कमजोरी पाउनेवाला र धर्ममा थोरै विश्वास राख्ने खालको र भाग्यको तर्फबाट मानसिक कष्ट सहनेवाला र सनातन धर्मलाई नमानेर कुनै कमजोर धर्मको पालन गर्ने भएको र धन खर्चको संचालनमा भाग्यको सहायता पाउने खालको र भाग्यको उदय अलि ढीलो पाउने खालको र मावली पक्षबाट तथा शत्रु पक्षबाट केही सान्त्वना पाउने भएको व्यक्ति होला।

कु० नं० ८९०

९ ७चं.
१० ८ ६
११ ५
१२ २ ४
१ ३

# वृश्चिक लग्नान्तर-भौमफलम्

जुन व्यक्तिको वृश्चिक राशिको मंगल लग्नबाट प्रथम स्थानमा छ भने त्यो मानिस प्रभावशाली, बलियो शरीर भएको र बर्ता रिस एवं अभिमान गर्ने भएको, अनि शरीरमा केही गरमीको विकार, कुनै रोगको रूपमा पाउनेवाला र माताको एवं मातृस्थानको केही हानि पाउनेवाला, भूमि-भवनादिको सुख-शान्तिको वातावरणमा केही विघ्न-बाधा पाउनेवाला, स्त्री स्थानमा पनि केही क्लेश पाउने खालको र अशान्ति पाउनेवाला र दैनिक व्यापारमा केही कष्ट सहने भएको तथा जीवनमा केही परेशानी मात्रै खालको तथा निकै बहादुरी र आत्मबलद्वारा अनेकानेक नाम निकाल्नेवाला एवं बढी जबरजस्त हिम्मत भएको र मावली पक्षको केही शक्ति पाउने खालको व्यक्ति होला।

कु० नं० ८९१

९ ७ १० ८मं. ६ ११ ५ १२ २ ४ १ ३

जुन व्यक्तिको धनराशिको मंगल लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस आफ्नू शरीरद्वारा धनवानमा गनिने खालको र धन प्राप्तिका लागि सदैव विशेष प्रयत्न गर्ने तथा धन-संग्रहको लागि निकै दगुरा-दगुर गर्ने र धन-संग्रहको सम्बन्धमा कमी हुनाले केही कष्ट अनुभव गर्ने र शरीरमा केही रोग र बन्धन पाउनेवाला, मावलीको केही न्यून सहायता पाउनेवाला, निकै बलियो कुरा गर्नेवाला, विद्या ग्रहण गर्नेवाला र सन्तान पक्षमा केही वैमनस्यताका साथै बल प्राप्त गर्ने भएको, जीवनको दिनचर्यामा केही शान पाउनेवाला, धर्म र भाग्यमा न्यूनता पाउने तथा क्षुद्र धर्म मात्रै होला।

कु० नं० ८९२

९मं. ७ १० ८ ६ ११ ५ १२ २ ४ १ ३

जुन व्यक्तिको मकर राशिको मंगल लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस निकै प्रभावशाली र महान् कार्य गरेर महानता पाउने भएको,

कु० नं० ८९३

९ ७
१० मं. ८ ६
११ ५
१२ २ ४
१ ३

उच्चकोटिको परिश्रम र पुरुषार्थ गर्नेवाला, ठूलो साहस भएको मावली पक्षको शक्ति प्राप्त गर्ने र झगडा आदि झ्याउलाहरूमा विजय पाउनेवाला, शत्रुमा पूरा प्रभाव पार्ने भएको, धर्म वा भाग्यमा केही दुर्बलता अनुभव गर्ने खालको र व्यापार आदि र मान प्रतिष्ठाहरूमा उन्नति पाउनेवाला र उन्नतिका लागि सदैव प्रयत्नशील रहने भएको र पिता स्थानमा न्यूनता वा दुर्बलता पाउने र दाजु-भाइको स्थानमा आफ्नू प्रभुत्व राख्नेवाला, आफ्नू मिहिनेतको ठूलो भर मान्नेवाला-स्वाभिमानी व्यक्ति होला।

जुन व्यक्तिको कुम्भराशिको मंगल लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस मातृ स्थानमा माताको पक्षमा केही कमी र केही नीरसता

कु० नं० ८९४

९ ७
१० ८ ६
११मं. ५
१२ २ ४
१ ३

पाउनेवाला, आफ्नू स्थानमा अडिने र सुख शान्तिको इच्छा गर्ने, दैनिक व्यापार गर्नेवाला तथा सुख स्थानमा हानि पाउने भएको, एवं स्त्री स्थानमा केही विरोध पाउने खालको स्त्री पक्ष र व्यापार पक्षमा केही आसक्ति वा परिश्रमको योग प्राप्त गर्नेखालको तथा अनेक युक्तिहरूद्वारा वा बल र आत्मबलबाट विशेष लाभ पाउनेवाला र आफ्नू इज्जत बढाउने तथा निकै प्रभाव पाउनेवाला, पिता स्थानबाट केही विरोध भाव सहित शक्ति पाउनेवाला र समाजमा सम्मान पाउने भएको र केही भूमियुक्त होला।

जुन व्यक्तिको मीन राशिको मंगल लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस बर्ता बुद्धिमान, बाठो र आनन्दी तथा नीतिज्ञ, सदैव होशियारी राख्न जान्ने र स्वाभिमानी तथा सधैं वीरताका कुरा गर्ने भएको र विजयमा विश्वास राख्नेवाला तथा पुरातत्त्व सिद्धान्तहरूलाई मान्ने भएको एवं जीवनमा गौरव युक्त भएर रहने खालको र आमदानी पाउनका लागि ठूलो प्रयत्न गर्नेवाला र बढी धन खर्च गर्न अघिसर्ने, अन्यान्य स्थानमा पनि सम्पर्क राख्नेवाला, वाणी र बुद्धिमा शक्ति भएको, पुत्रबाट शक्ति पाउनेवाला, किन्तु पुत्र-सम्बन्धमा केही विरोध वा बाधा-कष्ट पनि पाउने खालको र शरीरमा रोगको योग पाउनेवाला तथा शीलताको पालन गर्न असमर्थ रहने व्यक्ति होला।

कु० नं० ८९५

९ ७ १० ८ ६ ११ ५ १२ मं. २ ४ १ ३

जुन व्यक्तिको मेषराशिको मंगल लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस आत्माभिमानी, बहादुर र आत्मज्ञानी तथा दृढ शरीर भएको तथा विपत्तीहरू र शत्रुहरूको वास्ता नराख्नेवाला एवं उन्नतिशील विजय र देह-बल तथा आत्मबल र परिश्रमद्वारा सम्मान पाउनेवाला, ठूलो प्रभावशाली भए पनि केही परतन्त्रता युक्त रहेर ख्याति प्राप्त गर्ने खालको तथा धर्म स्थानमा र भाग्यस्थानमा केही न्यूनता वा दुर्बलता अनुभव गर्ने भएको, बर्ता धन व्यय गर्ने र युक्तिबल द्वारा वा बांगो बाटोबाट धेरै थरि काम सपार्न जान्नेवाला तथा विशेष उन्नति गर्न सक्ने भएको एवं मावली पक्षमा प्रभाव पाउनेवाला तथा शरीरमा केही अशान्ति र आधि व्याधी एवं झ्याउलाहरू तथा थकाईको योग पाउने खालको सतर्क र सावधान रहने व्यक्ति होला।

कु० नं० ८९६

९ ७ १० ८ ६ ११ ५ १२ २ ४ १मं. ३

जुन व्यक्तिको वृष राशिको मंगल लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस स्त्री स्थानमा केही वैमनस्यता पाए पनि केही शक्ति पाउनेवाला केही झगड़ा वा हित प्राप्त गर्ने खालको एवं व्यापारको स्थानमा बढी परिश्रमले आफ्नू काम चलाउने र व्यापारबाट नै सम्मान पाउनेवाला साहसी भोगी, इन्द्रिय-सुख प्राप्त गर्नेवाला स्वाभिमानी देह-बलभएको, देहमा र इन्द्रियमा केही गुप्त रोग वा परेशानी अनि केही परिश्रम प्राप्त गर्नेवाला, आफ्नू परिश्रमबाट मुख्य दुइ कुरा-मान र धनको विशेष ख्याल राख्ने भएको र पितास्थानबाट शक्ति वा इज्जतमा वृद्धि गर्ने किसिमको, राज-समाजको स्थानमा परोपकारी द्वारा सफलता र प्रभाव पाउनेवाला, बाँगो वा कठिन चाल चल्न जान्ने इज्जतदार व्यक्ति होला।

कु० नं० ८९७

९ ७
१० ८ ६
११ ५
१२ २मं. ४
१ ३

जुन व्यक्तिको मिथुन राशिको मंगल लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस शरीरले कष्ट पाउनेवाला र हृदयमा दाह भोग्नेवाला, रोगयुक्त प्रदेशवासी वा अन्य स्थानमा निवास गर्ने, केही विपत्तीमा परेको, मावली पक्षबाट हानि पाउनेवाला, सानो खाले पुड्को, आमदानी र लाभ तथा धन-प्राप्तिको विशेष ध्यान राख्ने र त्यसमा कोशिशसहित लागि पर्ने भएको, निकै ठूलो पुरुषार्थ गर्ने, दाजु-भाइलाई बढी मनपराउने र निकै ठूलो हिम्मत वा साहस भएको र गुप्त शक्तिवाला तथा ठूलो भेद युक्त नीति जान्ने र मान अपमानको वास्ता नराख्ने भएको गुप्त लागतका कारणहरूले गर्दा केही डरलाग्दो खालको मानिनेवाला, जीवनमा आफूभित्र केही अभिमान राख्ने खालको व्यक्ति होला।

कु० नं० ८९८

९ ७
१० ८ ६
११ ५
१२ २ ४
१ ३मं.

जुन व्यक्तिको कर्क राशिका मंगल लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस आफू भित्र न्यूनता वा दुर्बलता अनुभव गर्ने खालको र शरीरमा कमजोरी पाउनेवाला र कुनै कमजोर धर्मको पालन गर्ने भएको र निकै ठूलो पुरुषार्थ गर्नेवाला वा परिश्रमले हैरानी दिक्दारी पाउनेवाला तथा धेरै धन खर्च गर्नेवाला र मातृस्थानमा र मावली पक्षमा पनि दुर्बलता पाउने भएको र सुखका साधन आदि वा भूमिको अधिकार पाउनको लागि प्रयत्नशील रहने खालको र अन्यान्य स्थानको पनि सम्पर्क योग राख्ने भएको र ईश्वरभक्ति वा यथार्थ धर्ममा श्रद्धा भक्ति कम राख्ने किसिमको तथा केही दुर्बलताको साथ वा ढीलो-चाँडो भए पनि भाग्य-वृद्धिलाई परिश्रमले प्राप्त गर्नेवाला तथा केही गुप्त युक्ति जान्ने खालको दाजु-भाइको शक्ति पाउने व्यक्ति होला।

कु० नं० ८९९

| | | |
|---|---|---|
| ९ | | ७ |
| १० | ८ | ६ |
| ११ | | ५ |
| १२ | २ | ४मं. |
| १ | | ३ |

जुन व्यक्तिको सिंह राशिको मंगल लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस निकै प्रतापी, बुद्धिद्वारा राज्य-सुख भोग्ने भएको, शरीरमा सौन्दर्य र तेज प्राप्त गर्ने खालको निकै प्रभावशाली होशियार कर्मिष्ठ, बढी बाठो दिमागी काम गर्नेवाला,केही रोगयुक्त वा पिता स्थानको उन्नति गर्ने भएको र पितासित केही विरोध पाउनेवाला, एवं नाम कमाउनेवाला, आत्मबल भएको दृढ संकल्प राख्ने वाला, मातृस्थानमा केही नीरसता पाउनेवाला या विरोध पाउनेवाला परिश्रमी, सन्तान शक्ति प्राप्त गर्नेवाला, निकै बुद्धिमान, विद्यावान, बोल्नमा दह्रो र हुकुम चलाएर आफ्नू काम गराउने खालको केही ख्याति प्राप्त व्यक्ति होला।

कु० नं० ९००

| | | |
|---|---|---|
| ९ | | ७ |
| १० | ८ | ६ |
| ११ | | ५मं. |
| १२ | २ | ४ |
| १ | | ३ |

जुन व्यक्तिको कन्या राशिको मंगल लग्नबाट एघारौं स्थानमा छ, भने त्यो मानिस आफ्नू शारीरिक शक्तिले बढी धन कमाउने खालको, ठूलो प्रभावशाली तथा उत्तम पुरुषार्थ गर्न सक्ने वा बढी नाफा खाने, मावली पक्षबाट लाभ युक्त शक्ति प्राप्त गर्ने भएको, लाभ प्राप्त गर्ने र बुद्धिमा बल र तीक्ष्णता पाउने खालको तथा पुत्र-सुख प्राप्त गर्नेवाला र सन्तान पक्षबाट केही न्यूनता वा व्यर्थ झ्याउलो आइलाग्ने तथा आफ्नू चातुर्य र सावधान रहने योगले विशेष लाभ पनि पाउने भएको र विपक्षीहरूमा विजय एवं आफ्नू प्रभाव पार्न जान्नेवाला, शरीरमा केही कमजोरी पाउने भएको निकै रिसाहा व्यक्ति होला।

कु० नं० १०१

९ ७
१० ८ ६मं.
११ ५
१२ २ ४
१ ३

जुन व्यक्तिको तुला राशिको मंगल लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस शारीरिक पक्षमा बढी कष्ट अनुभव गर्नेवाला तथा दुर्बलता पाउनेवाला र खर्चको विघ्न बाधाले निकै परेशान रहने, झगड़ा-विवादको विषयमा र रोगादि झ्याउलोमा धन खर्च गर्नेवाला, मावली पक्षमा कमजोरी पाउने खालको र केही अन्य स्थानहरूमा निवास गर्ने भएको तथा ठूलो पुरुषार्थ एवं कडा परिश्रम गर्नेवाला, दाजु-भाइलाई मनपराउनेवाला तथा दुर्बलतामा पनि प्रभाव कायम राख्ने भएको र व्यापारमा कुशलता पाएको, हृदयमा अशान्ति अनुभव गरिरहने र स्त्री एवं गृहस्थीमा सुख-दुःखको अनुभव गर्ने तथा भोगको बढी इच्छा राख्ने भएको र भोगप्राप्तिको लागि विशेष प्रयत्न गर्दै रहनेवाला, चंचल मन र हृदय अशान्त भए पनि भ्रमण गर्न रुचाउने खालको व्यक्ति होला।

कु० नं० १०२

९ ७मं.
१० ८ ६
११ ५
१२ २ ४
१ ३

# वृश्चिक लग्नान्तर-बुधफलम्

जुन व्यक्तिको वृश्चिक राशिको बुध लग्नबाट प्रथम स्थानमा छ भने त्यो मानिस पुरातत्त्व शक्तिबाट सम्बन्धित विशेष कार्यको द्वारा लाभ र आमदानी पाउनेवाला, सौम्य प्रकृति वा सौम्य आचरणको भएर पनि एक प्रकारको रिस र अशान्ति आफूभित्र राख्न सक्ने, लामू आयुवाला र उत्साहपूर्वक शानदार जीवनको समय व्यतीत गर्ने भएको, गहीरो र गुप्त चालहरूको आदर्शरूपमा विवेक शक्तिद्वारा प्रयोग गरेर व्यापारमा फाइदा कमाउनेवाला, शरीरको योगद्वारा र शरीरको कठिन परिश्रमहरू द्वारा लाभ पाउने अधिकारी भएको, जीवनको आमदानीको शक्तिद्वारा लौकिक गृहस्थीको पूरा ध्यान राख्ने खालको होला।

कु० नं० १०३

९ ७ १० ८बु. ६ ११ ५ १२ २ ४ १ ३

जुन व्यक्तिको धन राशिका बुध लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस धन संग्रह गर्नमा अनेक साना-ठूला युक्तिहरू विवेक-शक्तिको पूर्ण सफलता प्राप्त गर्ने खालको तथा आमदानीलाई जोर्ने प्रयत्न गर्दै रहनेवाला, पुरातत्त्वको निकै ठूलो लाभ कमाउनेवाला, र धन संग्रह गर्नमा केही हानिहरू पनि पाउनेवाला र जीवनको दिनचर्यामा केही धनी परिवारको झैं रहन-सहन उच्च हुने कारणले पनि धन-संग्रहको केही न्यूनता पाउनेवाला र लामू आयुष्य भएको, ठूलो इज्जतदार र सुख भोग्नेवाला तथा व्यापारमा बढी लाभ कमाउनेवाला र गूढ एवं पैतृक लाभ पाउनेखालको तथा विचार शक्ति ले ठूला-ठूला गहीरा चाल सोचेर फाइदा कमाउनेवाला र कुटुम्बको लाभ र हानि दुवैको योग पाउनेवाला होला।

कु० नं० १०४

९बु. ७ १० ८ ६ ११ ५ १२ २ ४ १ ३

जुन व्यक्तिको मकर राशिको बुध लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस सौम्य रीतिले ठूलो पुरुषार्थ गर्नेवाला र पुरुषार्थले लाभ पाउनेवाला तथा गूढ विवेक-शक्तिले लाभ पाउने खालको र पुरातत्त्व शक्तिको उत्तम फल प्राप्त गर्नेवाला एवं गूढ लाभको योजनाहरूद्वारा भाग्यमा सफलताको योग पाउने भएको र आयुको वृद्धि पाउने भएको, दाजु-भाइ दिदी-बहिनीको सम्पर्कमा केही बिघ्न-बाधाको साथ-साथै लाभ र आत्मीयताको योग पाउने भएको र दाजु-भाइ दिदी-बहिनीको सम्बन्धमा केही न्यूनता या क्लेशको साधारण योग प्राप्त गर्नेवाला तथा धर्मको सम्बन्धमा केही स्वार्थयुक्त नीतिको प्रयोग गर्नेवाला व्यक्ति होला।

कु० नं० १०५

९ ७
१० बु. ८ ६
११ ५
१२ २ ४
१ ३

जुन व्यक्तिको कुम्भ राशिको बुध लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस आफ्नू स्थानमा केही विघ्न-बाधाहरू सहित सुखपूर्वक आमदानी र पुरातत्त्व लाभको सुख भोग्ने खालको तथा आमदानी र दिनचर्याका कारणहरूबाट सुखका साधनहरूमा केही कमीको योग पाउने भएको र मातृस्थानमा लाभयुक्त भएर पनि केही न्यूनता र क्लेश पाउने भएको र आमदानी एवं पुरातत्त्वको लाभ र सुखलाई विवेक र विचारहरू द्वारा प्राप्त गर्ने भएर र मान-सम्मानलाई युक्तिले प्राप्त गर्ने र गूढ युक्तिहरूबाट बढी सुखको अनुभव गर्ने व्यक्ति होला।

कु० नं० १०६

९ ७
१० ८ ६
११बु. ५
१२ २ ४
१ ३

जुन व्यक्तिको मीन राशिको बुध लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस विद्या र बुद्धिमा केही न्यूनता पाउनेवाला एवं थोरै विद्या पाउनेवाला र सन्तान पक्षमा केही हानि र क्लेश पाउने भएको तथा आयुको केही दुर्बलताको ख्याल राख्ने भएको र गुप्त एवं गहीरो योजनाहरू द्वारा र बुद्धि-बलले अधिक लाभ कमाउने भएको र बर्ता लाभको कुरा हरेक-स्थितिमा विचार्ने खालको तथा बढी लाभ पाउनका लागि बर्ता चिन्तित रहने भएको अनि आफ्नू जीवनमा केही भित्री दुर्बलता र शारीरिक कष्ट अनुभव गर्नेवाला तथा पुरातत्त्वको लाभ कष्ट गरेर नै पाउने भए पनि पुरातत्त्वकै योगले र बुद्धिको कठिन परिश्रमद्वारा बढी लाभ पाउनेवाला, कटुवाणी बोल्ने र लुकाइ-छपाइ गर्ने खालको होला।

कु० नं० १०७

९ ७ १० ८ ६ ११ ५ १२ बु. २ ४ १ ३

जुन व्यक्तिको मेष राशिको बुध लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस आमदानीको लागि आफ्नू जीवनमा चिन्ता र परतन्त्रताको योग पाउनेवाला, केही आमदानी रोग वा विघ्न-बाधा वा आफ्नू कर्मले पनि पाउनेवाला र खर्चको साधन बढी पाउने तथा अन्यान्य स्थानको पनि केही सम्बन्ध पाउनेवाला र आफ्नू जीवनकालमा दिनचर्याको समयको पूरा सदुपयोग गर्न नसक्ने तर चिन्ताहरूले ढाकिइरहने खालको वा गुप्त योजनाहरूलाई विवेक शक्तिद्वारा अझ बढी गूढ तुल्याएर प्रयोग गर्ने भएको तथा जीवनका कठिनाईहरू सहन गरेर नै निवारण गर्न जान्ने र शत्रु स्थानमा कोमल भावले काम सिद्ध पार्ने र मावलीबाट केही न्यून सहयोग पाउने खालको होला।

कु० नं० १०८

९ ७ १० ८ ६ ११ ५ १२ २ ४ १बु. ३

जुन व्यक्तिको वृष राशिको बुध लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस दैनिक व्यापारको स्थानमा केही कष्टयुक्त कर्मद्वारा लाभ प्राप्त गर्ने भएको र सम्मान पनि पाउनेवाला एवं स्त्री स्थानमा सुख लाभको अतिरिक्त केही गुप्त विघ्न-बाधा र क्लेश पनि सहने खालको, तर जीवनको आनन्ददायक समय पनि विवाह भइसकेपछि पाउनेवाला, इन्द्रिय भोगविलासको सम्बन्धमा प्रत्यक्ष भन्दा अप्रत्यक्षको वर्ता लाभ पाउने खालको तथा व्यापार र लाभको सम्बन्धमा केन्द्रस्थ रहेर जनताको जानकारीमा आएर काम गर्ने भएको तथा गूढ योजनाहरूबाट जटिल विचारहरू द्वारा बढी लाभ कमाउने अनि गहीरो विवेक-शक्तिको लाभ र व्यापारद्वारा जीवनमा गौरव मान्ने भएको परिश्रमी व्यक्ति होला।

कु० नं० १०९

९ ७
१० ८ ६
११ ५
१२ २बु. ४
१ ३

जुन व्यक्तिको मिथुन राशिको बुध लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस लामू आयु भएको तथा अत्यन्त गूढ तत्त्वलाई विवेक-शक्तिले सरल तुल्याउन जान्ने, पुरातत्त्व विभागको विशेष अधिकार र लाभ पाउने भएको अनि आमदानी र लाभको लागि अन्यान्य स्थानको सुयोगबाट लाभ कमाउनेवाला तथा लाभ पाउने गोरेटोबाट अथवा प्राप्तिको मार्ग स्थानका कारणहरूद्वारा जीवनको दिनचर्यामा विशेष उज्ज्वलता र शानदारी पाउनेवाला, धन संग्रहको लागि पूर्ण शक्ति जुन गूढभन्दा पनि गूढ छ, त्यसैको प्रयोग गर्नेवाला, जीवनमा आनन्द, सुख र दिनचर्यामा कठोरता एवं कोमलता मिश्रित उपयोग गर्ने व्यक्ति होला।

कु० नं० ११०

९ ७
१० ८ ६
११ ५
१२ २ ४
१ ३बु.

जुन व्यक्तिको कर्क राशिको बुध लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस भाग्य-शक्ति द्वारा आमदानी सम्बन्धी प्रत्यक्षको खूब लाभ पाउनेवाला, विवेक–शक्तिद्वारा पैतृक र पुरातत्त्वको बल पाउनेवाला, वर्तमानमा पुण्य संचय गर्ने इच्छा भए पनि अपूर्ण काम नै गर्नसक्ने भएको, पुरुषार्थको वृद्धि गर्ने खालको, जीवनको दिनचर्यामा आनन्द लिने भएको, लामू आयुष्य पाउनेवाला, यशमा केही न्यूनता पाउनेवाला, लौकिक र पारलौकिक विषयको गूढ विवेकको लाभ पाउनेवाला, स्वार्थसिद्धिको पूरा ध्यान राख्ने भएको र भाग्यमा केही कमजोरी न्यूनता पाउने चिन्तारहित होला।

कु० नं० १११

९ ७
१० ८ ६
११ ५
१२ २ ४बु.
१ ३

जुन व्यक्ति सिंहराशिको बुध लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस सम्मानपूर्वक लाभ पाउने खालको, पुरातत्त्व र पैतृक लाभ पनि सिर ठड्याएर पाउनेवाला, पिताको स्थानमा केही हानि वा क्लेषयुक्त लाभको योजना पाउने भएको, लामू आयु पाउनेवाला, जीवनको समय निकै प्रभावशाली कर्मले वा विवेक बलले व्यतीत गर्नेवाला, आमदानीको लागि र उन्नतिको निम्ति निकै गूढ विवेक र राजनीतिले काम गर्ने भएको, तर कठोरता भित्र कोमलता राख्न जान्ने भएको, आफ्नू पदोन्नतिको लागि र मान प्रतिष्ठाको सम्बन्धमा केही बाधा पाउने साहसी व्यक्ति होला।

कु० नं० ११२

९ ७
१० ८ ६
११ ५बु.
१२ २ ४
१ ३

जुन व्यक्तिको कन्याराशिको बुध लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस पुरातत्त्वको महान लाभ पाउने भएको र लामू आयुष्य पाएको,

कु० नं० ११३

९ ७
१० ८ ६बु.
११ ५
१२ २ ४
१ ३

विवेक-शक्ति र गूढ युक्तिहरू द्वारा धेरै थरिका अनेक लाभ पाउनेवाला र जीवनमा भोगानन्दको महान लाभ पाउनेवाला, विद्या र बुद्धिमा केही न्यूनता वा दुर्बलता पाउने भएको, सन्तान पक्षमा केही क्लेशको योग पाउनेवाला एवं बोल-चालमा कुराकानी गर्दा विवेक शक्तिमा पनि केही कमजोरी पाउनेवाला, पूर्व संचित शक्तिको निकै लाभ पाउने भएको, लुकाउने कुराहरूबाट निष्कर्ष झिक्न जान्ने, जीवनको मग्न लापरवाहीबाट र केही कटु वाणीबाट आफ्नू प्रभाव पार्न जान्ने व्यक्ति होला।

जुन व्यक्तिको तुला राशिको बुध लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस धेरै बर्ता धन खर्च गर्ने र अन्यान्य स्थानको सम्पर्कबाट पनि बढी

कु० नं० ११४

९ ७बु.
१० ८ ६
११ ५
१२ २ ४
१ ३

लाभ पाउने भएको एवं पुरातत्त्वको संचित विभूतिको यथार्थ लाभ पाउने नसक्ने तर पूर्व र वर्तमानको हानि पाएर विवेक-शक्तिबाट अन्य स्थानबाट सफलता प्राप्त गर्ने खालको र बाल्यकालको जीवनमा अशान्तिको योग पाउनेवाला तथा जीवनकालमा ढीलो वा परको सम्पर्कबाट लाभ पाउने भएको र खर्चबाट फाइदा प्राप्त गर्ने खालको तथा लाभमा दुर्बलता वा न्यूनता पाउनेवाला तथा आयुस्थानमा पनि कहिले काहीं निकै निराशाजनक योग पाउनेभएको, स्वतः बर्ता खर्चको योग पाउने भएको, केही विवाद झगडा र रोग इत्यादिको योग पनि पाउनेवाला होला।

# वृश्चिक लग्नान्तर- गुरुफलम्

जुन व्यक्तिको वृश्चिक राशिको गुरू लग्नको प्रथम स्थानमा छ भने त्यो मानिस बुद्धिमान, पण्डित र निकै ठूलो धर्मज्ञ, नीतिज्ञ वा धनको शक्ति प्राप्त गर्ने भएको, निकै योग्यता र सन्तान पाउने खालको, हृदय र बुद्धिको बलले ठूलो सम्मान पाउने भएको, पुत्रको माध्यमबाट उन्नति पाउने, गृहस्थी र व्यापारको बढी ध्यान राख्नेवाला, धन र कुटुम्बको वृद्धि गर्नमा लागि रहने भएको ठूलो गुणी, न्यायको पक्षधर, उचित र बचाउतिरको कुरा गर्नेवाला, आफ्नू अंगमा अनेक कला राख्ने भएको तथा ज्योतिषमा बढी प्रेम गर्ने भएको, प्रतिष्ठावान, दूरदृष्टि राख्ने खालको, आत्मज्ञानी कहिने, प्रभावशाली तथा सनातन-धर्म मात्रे, ईश्वरमा निष्ठा र विश्वास भएको होला।

कु० नं० ११५

९ ७ १० ८गु. ६ ११ ५ १२ २ ४ १ ३

जुन व्यक्तिको धन राशिको गुरू लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस बुद्धि-विद्याको बलले धनसंग्रह गर्ने भएको र धेरै विद्याको धनी, बडो होशियार, ठूलो प्रभाव राख्ने विद्याको बलले धेरै सम्मान पाउने खालको तथा आफ्नू इज्जतमा उन्नति पाउने भएको पिता स्थानबाट लाभ र वृद्धिको योग पाउनेवाला, राज-समाजबाट अनेक फाइदा पाउनेवाला, बडो कर्मेष्ठी र उन्नतिको लागि मन र बुद्धि द्वारा निकै प्रयत्नशील रहिरहने भएको तथा सन्तान भरिपूर्ण भएको, जीवनमा प्रतिष्ठित सम्मान प्राप्त गर्नेवाला र केही पुरातत्त्वको क्रमबाट फाइदा पाउनेवाला र सन्तान पक्षमा र विद्यास्थानमा केही बन्धन अनुभव गर्ने व्यक्ति होला।

कु० नं० ११६

९गु. ७ १० ८ ६ ११ ५ १२ २ ४ १ ३

जुन व्यक्तिको मकर राशिको गुरू लग्नबाट तेस्रो स्थानमा छ भने त्यो मानिस दाजु-भाइको हानि गर्ने र दाजु-भाइबाट कमजोरी वा न्यूनता पाउने तथा धनजनको हानि पाउने खालको र विद्या-बुद्धिमा पनि न्यूनता पाउने भएको तथा सन्तान पक्षमा पनि दुर्बलता नै पाउने भएको, टाउको ठूलो, धार्मिक र ईश्वरमा श्रद्धा-भक्ति राख्ने तथा सदैव न्यूरेर हिंड्नेवाला, पुरुषार्थको स्थानमा कमजोरी पाउने भएको र बुद्धि एवं धनको हीनताले गर्दा एवं लुकाइ-छिपाइ गर्ने र शक्तिले काम सिद्ध पार्नेवाला, स्वतः लाभ पाउनेवाला र व्यापारमा निकै लाभ कमाउने तथा स्त्री स्थानमा सहयोग शक्ति भेट्टाउने र इन्द्रिय भोगमा बुद्धि अड्याउने भएको धर्म एवं भाग्य शक्तिलाई ठूलो मान्ने खालको र दुर्बल हृदयको व्यक्ति होला।

कु० नं० ११७

९ ७ १० गु. ८ ६ ११ ५ १२ २ ४ १ ३

जुन व्यक्तिको कुम्भ राशिको गुरू लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस धनवान, बुद्धिमान तथा इज्जतदार र सन्तान प्राप्त गर्ने खालको, लामू आयु पाउनेवाला, खूब धन खर्च गर्नेवाला र सुखका साधनहरूमा केही न्यूनता र केही नीरसता अनुभव गर्ने भएको, मातृस्थानमा केही वैमनस्यता वा मन नपराइकन सहयोग पाउने र पिता स्थानमा फाइदा पाउनेवाला, जीवनको दिन-चर्यामा समय ठूलो धनाढ्यको झैं व्यतीत गर्न जान्ने भएको धन जोर्नमा वा सम्पत्ति कायम राख्नमा केही विघ्न-बाधाहरू अनुभव गर्ने खालको होला।

कु० नं० ११८

९ ७ १० ८ ६ ११गु. ५ १२ २ ४ १ ३

जुन व्यक्तिको मीन राशिको गुरू लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस निकै ठूलो विद्वान तथा धेरै थरिका विद्या जान्ने, बर्ता प्रभाव पाउने र प्रभाव-युक्त शैलीले नै 'म ठूलो' भन्ने भावले बोल्ने र आध्यात्मिक ज्ञानमा अधिकार र श्रद्धा राख्नेवाला, देहमा गौरव र सम्मान पाउनेवाला, आफूभित्र धन-जनको शक्ति राख्ने भएको अनुकूल सन्तान प्राप्त गर्नेवाला र भाग्यवृद्धि पाउने खालको र भाग्यलाई नै ठूलो मान्ने भएको, सनातन धर्मको हृदयदेखि नै पालन गर्ने भएको र ईश्वरमा विश्वास राख्नेवाला, अनेक लाभ पाउने भएको, बुद्धि र वाणीमा विशेष कला राख्ने तथा बुद्धिले नै धन कमाउन जान्ने, शास्त्रीय ज्ञान भएको निकै भाग्यशाली होला।

कु० नं० ११९

९ ७ १० ८ ६ ११ ५ १२ गु. २ ४ १ ३

जुन व्यक्तिको मेष राशिको गुरू लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस केही परतन्त्रता वा केही विघ्न-बाधा भए पनि बराबर धन कमाउने भएको, बुद्धिको परिश्रम-युक्त कामले उन्नति पाउने भएको, मान र इज्जतको काम गर्नेवाला, पिता स्थानको उन्नति गर्ने र शत्रु स्थानमा युक्तिद्वारा काम सिद्ध पार्ने, अधिक धन संग्रह गर्नका लागि बढी प्रयत्नशील रहनेवाला, कुटुम्बको पनि केही वृद्धि गरिदिने तथा सन्तान र विद्याको न्यूनता पाउने भएको, विद्या पढ्ने बेलामा कष्ट अनुभव गर्ने खालको, खूब धन खर्च गर्ने र आफ्नू कुरा राम्ररी बुझाउन असमर्थ रहने भएको एवं बुद्धिमा र हृदयमा केही कमजोरी मान्नेवाला र मावलीबाट केही सहायता प्राप्त गर्ने खालको होला।

कु० नं० १२०

९ ७ १० ८ ६ ११ ५ १२ २ ४ १गु. ३

जुन व्यक्तिको वृष राशिको गुरू लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस बुद्धिद्वारा दैनिक व्यापारको पंक्तिबाट केही परिश्रमयुक्त रहेर पनि धन कमाउने भएको, हृदय बलले केही सम्मानपूर्ण व्यापार गर्नेवाला, धेरै राम्रो लाभ पाउनेवाला, मान-सम्मान पाउनेवाला, दाजु-भाइको स्थानमा न्यूनता पाउने खालको, पुरुषार्थ र साहसबाट पनि दुर्बलतानै पाउनेवाला, विवाहपछि स्त्रीबाट सहायता शक्ति र धन वृद्धिको योग पाउनेवाला, सन्तान सुख पाउनेवाला, स्त्रीमा प्रभाव पाउने र स्त्रीस्थानमा केही नीरसताको योग पाउने भएको, विद्यामा केही न्यूनताका साथै सतर्कता र होशियारी पाउने खालको, बडप्पन र धनाढ्य झैं काइदा राख्ने, कीमती कार्य गर्ने र सावधान रहने व्यक्ति होला।

कु० नं० १२१

९ ७
१० ८ ६
११ ५
१२ २गु. ४
१ ३

कु० नं० १२२

९ ७
१० ८ ६
११ ५
१२ २ ४
१ ३गु.

जुन व्यक्तिको मिथुन राशिको गुरु लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस थोरै विद्या पाएको र थोरै धन भएको सन्तान पक्षमा कष्ट सहन गर्ने भएको र हृदयमा अशान्ति अनुभव गर्नेवाला, बढी धन व्यय गर्ने र धन कमाउने सम्बन्धमा निकै परिश्रम तथा अनेक थरिका विघ्न-बाधा र कूटनीति एवं गुप्त योजनाहरूबाट काम सिद्ध पार्ने, पुरातत्त्व धनको प्राप्ति गर्न जान्नेवाला, विदेशको सम्पर्क पनि धनको निम्ति नै बनाउने भएको र धन संचय गर्नका लागि र सन्तान सुख प्राप्त गर्नका लागि कठिन प्रतीक्षा गर्ने भएको, कहिले काहीं धन हानि र सन्तान हानिहरूको योग पाउनेवाला, भूमि-भवन र मातृस्थान तथा सुखका साधनहरूमा केही नीरसता अनुभव गर्ने भएको र प्रकट बुद्धिको युक्तिभन्दा गुप्त भेदको बुद्धिद्वारा बोल-चालको शक्ति राख्ने खालको तथा लामू आयु भएको, धनाढ्य व्यक्ति झै रहन-सहन भएको होला।

जुन व्यक्तिको कर्क राशिको गुरू लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस ठूलो भाग्यमानी बुद्धिमान तथा महान विद्याद्वारा सम्मान

कु० नं० १२३

९ ७
१० ८ ६
११ ५
१२ २ ४गु.
१ ३

पाउनेवाला, धार्मिक कार्य गर्ने भएको र धार्मिक विषयमा धारा-प्रवाह बोल्न सक्ने अनि भाग्यको शक्तिबाट महान् शास्त्रीय ज्ञान पाउनेवाला, उत्तम तथा भाग्यमानी सन्तान प्राप्त गर्नेवाला, धेरै ठूलो प्रतिष्ठा पाउने भएको, ज्योतिषको पूरा ज्ञान भएको तथा देहमा प्रभाव अनि मस्तक चाक्लो भएको तथा निकै दूरदर्शी र बुद्धि एवं भाग्य-बलद्वारा धेरै धन पाउने भएको र कौटुम्बिक शक्तिवाला र सनातन धर्मी र थोरै परिश्रम गर्न मनपराउनेवाला, पुरुषार्थमा केही न्यूनता पाउने भएको तथा दाजु-भाइ दिदी-बहिनीको तर्फबाट कमीको कारण अनुभव गर्ने भएको, हृदयमा निकै बर्ता उत्साह भएको तथा ईश्वरमा श्रद्धा-भक्ति र अटल विश्वास राख्ने भएको आत्मज्ञानी व्यक्ति होला।

कु० नं० १२४

९ ७
१० ८ ६
११ ५गु.
१२ २ ४
१ ३

जुन व्यक्तिको सिंह राशिको गुरू लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस धेरै ठूलो इज्जतदार तथा धेरै धन कमाउने भएको, राज-समाजबाट बुद्धियोगद्वारा धन-शक्ति प्राप्त गर्नेवाला, व्यापार र पिता स्थानबाट पनि धन-शक्ति पाउने भएको र ठूलो कारबार गर्न जान्ने, निकै बर्ता प्रभावशाली कर्मको योगबाट प्रभाव पाउने खालको, उत्तम सन्तान पाउनेवाला, राजनैतिक र सामाजिक विद्या तथा विवेकको राम्रो ज्ञान राख्ने र मानयुक्त अभिमानको पूजनीय योग पाउने भएको, धेरै धन-जनको शक्ति पाउनेवाला र मावली पक्षमा पनि बढी इज्जत र लाभ पाउनेवाला र शत्रुहरूमा आफ्नू बुद्धि धन र ऐश्वर्यको विलक्षण प्रभाव स्थापित गर्नेवाला, सुखस्थानमा केही अपठेरो सहित सम्बन्ध पाउने खालको उत्साही व्यक्ति होला।

जुन व्यक्ति कन्या राशिको गुरू लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस बुद्धिद्वारा र विद्याको योगबाट धन कमाउने भएको, सन्तान लाभको उत्तम सुख प्राप्त गर्नेवाला, उत्तम र बहुमूल्य विद्या पाउने भएको, धन-जनको शक्तिबाट खूब लाभ पाउने खालको, पुरुषार्थमा न्यूनता पाउने भएको, दाजु-भाइको स्थानमा पनि न्यूनता अनुभव गर्नेवाला, बुद्धि-युक्त लाभको कुरा गर्ने जान्ने तथा अभिमान-युक्त कुराकानी गर्नेवाला र केही आलस्य माने पनि प्रसस्त व्यापार गरेर धन कमाउन जान्ने भएको, स्त्री भोगादिमा बुद्धि राख्ने भएको र व्यापारको घेरामा पनि निकै ठूलो विचारका साथ जुन वेला पनि उन्नतिकै विचार गर्नेवाला तथा मान्यजन र गुरूजनहरूको कृपा पाउनेवाला तथा कौटुम्बिक लाभ पाउने भएको धनवान र इज्जतदार व्यक्ति होला।

कु० नं० १२५

९ ७
१० ८ ६गु.
११ ५
१२ २ ४
१ ३

जुन व्यक्तिको तुला राशिको गुरू लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस बढी धन खर्च गर्ने, धन संग्रह गर्नमा अनेक कष्टहरू सहन गरे पनि धनमा न्यूनता वा दुर्बलता पाउने भएको र धनको लागि अन्य स्थानको सम्पर्क पाउने भएको, सन्तान पक्षमा अनेक हानिहरू पाउने खालको, फेरि सन्तान पक्षमै कष्ट अनुभव गर्नेवाला, विद्या ग्रहण गर्ने वेलामा अनेक बाधाहरू सहन गर्ने भएको, केही अनुचित फाइदाले कुराकानी गर्ने खालको, आफ्नू कथन वा आफ्नू भनाइको तात्पर्य अन्य व्यक्तिलाई राम्ररी बुझाउन नसक्ने भएको तथा घुमाउरो फाइदाले कुरा गरेर कुनै प्रकाले पनि आफ्नू काम सिद्ध पार्न जान्ने भएको, सुख शान्ति तथा मातृस्थानमा केही कमी अनुभव गर्ने भएको, शत्रु पक्षमा भिन्नताको प्रभाव राख्ने खालको र लामू आयु पाउनेवाला, अनि धनाढ्य काइदाले समय व्यतीत गर्नेवाला एवं पुरातत्त्वको लाभ पाउने खालको व्यक्ति होला।

कु० नं० १२६

९ ७गु.
१० ८ ६
११ ५
१२ २ ४
१ ३

# वृश्चिक लग्नान्तर-शुक्रफलम्

जुन व्यक्तिको मकर राशिको शुक्र लग्नबाट प्रथम स्थानमा छ भने त्यो मानिस अन्यान्य स्थानको सम्पर्कबाट राम्रो दैनिक व्यापार पाउने भएको तथा निकै शानदारी सहित बढी धन व्यय गर्नेवाला, केही जाती-नजाती काइदाले व्यापारमा बडो सतर्कता साथ काम गर्न जान्ने भएको तर व्यापारमा केही न्यूनता वा दुर्बलता र थोरै नाफा पाउने भएको, स्त्री-सुख र भोगादिमा केही वृद्धि पाउने, स्त्री-के कारणबाट बढी व्यय र शरीरमा कमजोरी पाउने खालको, व्यापारले गर्दा बढी डुल-फिर गर्ने र सम्मान पाउने, निकै बाठो र उत्तम भोगको इच्छा गर्ने तथा लौकिक व्यवहारलाई निकै योग्यताले उल्टो-सोझो गर्न जान्ने, बडो कुशल एवं बाठो र सावधान रहने, दूरदर्शी र सौन्दर्य मनपराउने खालको होला।

कु० नं० १२७

९ ७
१० ८शु. ६
११ ५
१२ २ ४
१ ३

जुन व्यक्तिको धन राशिको शुक्र लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस दैनिक व्यापारद्वारा तथा केही अन्य स्थानको सम्पर्कबाट धन प्राप्त गर्ने भएको र धन संग्रहको स्थानमा केही न्यूनता वा दुर्बलता पाउने खालको तथा केही धन हानि पाउनेवाला र इन्द्रियादिको बढी भोग खोज्ने खालको र खर्चलाई रोक्ने चेष्टामा रहनेवाला, आयुको समयमा एवं दिनचर्यामा बर्ता भोग र खर्चको आनन्द लिनेवाला, पुरातत्त्वको फाइदा अपूरो पाउनेवाला, धनवान र इज्जतदारमा गनिने भएको तथा कुटुम्बमा केही हानि पाउनेवाला, व्यापारको वृद्धिका लागि ठूला-ठूला युक्तिहरू रच्नेवाला, अन्य स्थानसित सम्बन्धित खर्च धनको योगबाट व्यापारमा उन्नति पाउने भएको तथा केही न्यूनता वा कमजोरी पनि अनुभव गर्ने खालको साहसी व्यक्ति होला।

कु० नं० १२८

९शु. ७
१० ८ ६
११ ५
१२ २ ४
१ ३

जुन व्यक्तिको मकर राशिको शुक्र लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस व्यापारको लागि निकै दगुरा-दगुर र पुरुषार्थ गर्ने भएको, अन्य स्थानको सम्पर्क शक्तिबाट व्यापारमा बल वृद्धि पाउने भएको, स्त्री भोगादिकको खर्च शक्तिबाट बढी उत्साह प्राप्त गर्ने खालको, भाग्योन्नतिको बर्ता चेष्टा र प्रयत्न गर्नेवाला र गृहस्थीको प्रसस्त आनन्द अभिमानपूर्वक लिने र दाजु-भाइ दिदी-बहिनीको केही योग-शक्ति पाउने भएको, स्त्रीको सहयोग पाउनेवाला, स्त्रीको र आफ्नू पुरुषार्थद्वारा खर्चको आनन्द लिनेवाला तथा शारीरिक बल-पुरुषार्थमा केही न्यूनता पाउनेवाला, दाजुभाइहरूका तर्फबाट केही हानिको योग पाउनेवाला तथा बढी चातुर्य एवं प्रभाव राख्ने भएको र व्यापारमा केही न्याय-अन्यायको पनि ध्यान राख्ने भएको बाठो व्यक्ति होला।

कु० नं० १२९

९ ७
१० शु. ८ ६
११ ५
१२ २ ४
१ ३

जुन व्यक्तिको कुम्भ राशिको शुक्र लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस बर्ता चातुर्यले दैनिक व्यापारलाई आफ्नू स्थानमा सुखपूर्वक चलाउन सक्ने, खर्च पनि सुखपूर्वक नै चलाउनेवाला तथा व्यापारमा केही न्यूनता वा कमजोरी र केही हानि सहने खालको, मातृ-स्थानमा केही हानि पाउनेवाला तथा सुखका साधनहरूमा केही हानि पाउनेभएको, स्त्री स्थानबाट सुख प्राप्त गर्ने खालको र व्यापारमा केही अन्यान्य स्थानहरूको सम्पर्क पाउने भएको एवं भोग र व्ययको आनन्द लिनेवाला, पिता स्थानबाट केही वैमनस्यता पाउने भएको र मानोन्नतिमा केही विघ्न-बाधा पाउनेवाला तथा केही भूमि इच्छा गरेभन्दा बढी पाउनेवाला, आनन्दी जीवन बिताउने व्यक्ति होला।

कु० नं० १३०

९ ७
१० ८ ६
११शु. ५
१२ २ ४
१ ३

जुन व्यक्तिको मीन राशिको शुक्र लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस चातुर्यको कलासहित्त दैनिक व्यापार चलाउने र बढी होशियार, पढे-लेखेको बुद्धिमान तथा ठूलो काट-छाँट गर्नेवाला, बढी धन व्यय गर्ने तथा आमदानीमा केही कमी पाउने भएको प्रभावशाली स्त्री भएको, व्यापारमा अन्य स्थानको सम्पर्क पनि पाउने खालको, इच्छित सन्तान पाउनेवाला, बर्ता भोग वासना राख्ने भएको, परिश्रम र कामको पूरा-पूरा लाभ पाउन नसक्नेवाला, सन्तान पक्षमा केही कमी पाउने भएको, बढी खर्च हुनाले केही कष्ट अनुभव गर्ने खालको, व्यापारको उन्नतिका लागि ठूला-ठूला दिमागी प्रयत्न सदैव गरिरहने खालको व्यक्ति होला।

कु० नं० १३१

९ ७
१० ८ ६
११ ५
१२ शु. २ ४
१ ३

जुन व्यक्तिको मेष राशिको शुक्र लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस स्त्रीबाट विरोध पाउनेवाला र स्त्रीका सुखहरूमा घाटा पाउने र व्यापारमा बर्ता कमजोरी पाउनेवाला र व्यापारमा हानि र बन्धन वा परेशानी एवं अन्यान्य स्थानको सहयोग पाउने भएको, बढी व्ययको विघ्न-बाधाहरूमा परेर खर्च गर्ने भएको वा खर्चको सम्बन्धमा केही बन्धन अनि रुकावट पाउनेवाला, गृहस्थीको सुखमा कष्ट सहने भएको, भोगमा बाधा पाउनेवाला र अन्य स्थानका सम्पर्कहरू केही बन्धन युक्त तथा व्यापारदायक वा युक्तिपूर्वक पाउनेवाला र व्यापारमा केही सोझो-बांगोको विवाद र खर्चा सहेर केही गुप्त युक्तिहरूसित चल्न जान्ने र केही स्त्री पक्षमा खर्च सहने, धेरै बाठो र होशियार व्यक्ति होला।

कु० नं० १३२

९ ७
१० ८ ६
११ ५
१२ २ ४
१शु. ३

जुन व्यक्तिको वृष राशिको शुक्र लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस बाहिरी स्थानको सम्पर्कबाट ठूलो रोजगार गर्न जान्नेवाला र रोजगारको दृढताका लागि बढी व्यय र निकै दगुरा-दगुर गर्न सक्ने भएको र स्त्री तथा गृहस्थीको खूब आनन्द भोग्ने खालको र खूब खर्च गर्न सक्ने वा खूब भोग पाउने खालको र व्यापारमा सुन्दरता एवं राम्रोपना तथा कलाको ध्यान राख्ने भएको र अन्य स्थानका मानिसहरूसित सम्पर्क राखेर आफ्नू व्यापारमा सुचारू रूपबाट उत्तम काम गर्न जान्ने र यति भएर पनि व्यापारमा केही दुर्बलता र केही कम नाफा पाउनेवाला, अनि स्त्रीपक्षको सुखमा केही न्यूनता पाउने भएको र स्त्रीबाट खर्चको विशेष सम्बन्ध राख्ने खालको व्यक्ति होला।

कु० नं० १३३

९ ७ १० ८ ६ ११ ५ १२ २शु. ४ १ ३

जुन व्यक्तिको मिथुन राशिको शुक्र लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस स्त्री-स्थानबाट केही हानि पाउने भएको र दैनिक व्यापारमा महान् कष्ट-बाधा सहनेवाला र व्यापारको अन्य स्थानहरूको सम्पर्कबाट र विघ्न-बाधाबाट खर्चको योगद्वारा चलाउन जान्ने भए तापनि व्यापारमा कहिले काहीं निकै बाधाहरू एवं न्यूनताहरू पाउनेवाला तथा तामसिक गुप्त कलापूर्ण कार्यहरूबाट संचालित गर्न सक्ने खालको अनि धेरै परिश्रम सहन सक्ने र धन-वृद्धिको बढी चेष्टा राख्ने भएको, भोगादिक कामेन्द्रियहरूको सुखमा बर्ता कमी अनुभव गर्ने खालको, गृहस्थीका ठूला-ठूला झ्याउलाहरू र खर्चको विपरीतताबाट परेशानी अनुभव गर्नेवाला, गुप्त चालहरू पनि निकै युक्तिहरूले चल्न जान्ने र फेरि दैनिक दिनचर्यालाई शानदार ढंगले चलाइरहने उपायहरू विचार्दै रहने खालको व्यक्ति होला।

कु० नं० १३४

९ ७ १० ८ ६ ११ ५ १२ २ ४ १ ३शु.

जुन व्यक्तिको कर्क राशिको शुक्र लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस व्यापारिक शक्तिलाई अन्य स्थानको सम्पर्कबाट र धार्मिक सम्बन्धबाट भाग्यको शक्तिद्वारा पाउनेवाला र भाग्यबलद्वारा नै खर्चको शक्ति पाउनेवाला, व्यापार र भाग्यमा केही कमजोरी पाउनेवाला, स्त्री र गृहस्थीको सुख भाग्य-शक्तिद्वारा केही न्यूनता सहित उत्तम प्राप्त गर्ने भएको, व्यापारमा केही न्याय गर्ने खालको, धर्म-सम्बन्धमा केही दुर्बलता पाउनेवाला, सौन्दर्य युक्त धेरै पुरुषार्थ गर्ने भएको, दाजु-भाइ दिदी-बहिनीहरूको योग न्यूनता-युक्त प्राप्त गर्नेवाला, ईश्वर र पुरुषार्थ दुवैलाई मात्रै र केही भाग्यमानी होला ।

कु० नं० १३५

९ ७
१० ८ ६
११ ५
१२ २ ४शु.
१ ३

जुन व्यक्तिको सिंह राशिको शुक्र लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस व्यापारलाई अन्यस्थानको सम्पर्कबाट उच्च ढंगले गर्नेवाला, केही दुर्बलता र विघ्न-बाधा पनि व्यापारको उन्नतिका लागि सहन गर्नेवाला तथा प्रदर्शनको अनुसार भित्री मान-प्रतिष्ठामा केही अशान्तिको वातावरण पाउनेवाला र स्त्री पक्षमा केही न्यूनता सहित उच्चता र सुख पाउने खालको अरू भूमि-भवनादि रहन-सहन र सुखका साधनहरू प्राप्त गर्ने तथा भोग-विलासको उच्च योजनाका अनुसार उच्चता नपाउनेवाला, पिता स्थानमा केही अशान्तिको योग पाउने खालको होला ।

कु० नं० १३६

९ ७
१० ८ ६
११ ५शु.
१२ २ ४
१ ३

जुन व्यक्तिको कन्या राशिको शुक्र लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस दैनिक व्यापारको लाभ निकै कमजोर स्थितिमा र अन्यान्य स्थानको सम्पर्कबाट प्राप्त गर्ने खालको र आमदानीमा बढी दुर्बलताहरू सहन सक्ने भएको र खर्च शक्तिमा पनि न्यूनता नै पाउने भएको तथा बर्ता बुद्धि र बढी चातुर्यहरू द्वारा काम सिद्ध पार्न जान्ने, स्त्री र गृहस्थीको लाभ अधुरो झैं या न्यूनता (कमजोरी) पाउने भएको, भोगादिक इन्द्रियहरूको सुखमा केही कमी पाउनेखालको र खर्च-शक्तिबाट पनि केही फाइदा पाउने भएको र खर्चलाई घटाउने चेष्टा गरिरहने भएको तथा सन्तानको केही वृद्धि पाउने भएको र लौकिक व्यवहारमा वा व्यापारको परिधिमा केही बढी ज्ञान राख्ने भएको र बर्ता बोलेर बढी प्रभावलाई विद्या-बुद्धिले पूर्ण जमाउन जान्ने खालको होला।

कु० नं० १३७

९ ७ १० ८ ६शु. ११ ५ १२ २ ४ १ ३

जुन व्यक्तिको तुला राशिको शुक्र लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस स्त्री र गृहस्थीको हानि पाउने खालको र स्त्री भोगादिक सुखहरूलाई व्यय-शक्ति र अन्य स्थानको योगबाट प्राप्त गर्ने भएको तथा व्यापारको लाभ पनि अन्य स्थानको सम्पर्कबाट नै पाउनेवाला र बढी धन व्यय गर्नेवाला एवं राम्रा पदार्थहरूमा र सौन्दर्य-युक्त कामहरूमा तथा मनोरंजन गर्ने कलाहरूमा नै प्रायः बढी धन व्यय गरेर स्यावासी पाउने र हर्ष मनाउने खालको होला। शत्रु पक्षमा केही न्यूरेर भए पनि आफ्नो काम सपार्न जान्नेवाला र अन्यान्य स्थानबाट निकै प्रभाव पाउने भएको तथा आफ्नो स्थानमा गृहस्थीको समस्त बात व्यवहारमा बढी कमजोरी (न्यूनता) अनुभव गर्ने खालको तथा मावली पक्षबाट अलि-अलि सहयोग पाउने व्यक्ति होला।

कु० नं० १३८

९ ७शु. १० ८ ६ ११ ५ १२ २ ४ १ ३

# वृश्चिक लग्नान्तर - शनिफलम्

जुन व्यक्तिको वृश्चिक राशिको शनि लग्नबाट प्रथम स्थानमा छ भने त्यो मानिस ठूलो पुरुषार्थ गर्ने भएको र साहसी, उत्साही व्यक्ति होला। दाजु-भाइ दिदी-बहिनीको तागत पाउनेवाला, व्यापारमा उन्नति गर्ने खालको र पिता स्थानमा केही क्लेष सहन गर्नेवाला र ठूलो व्यापारमा केही विघ्न-बाधा एवं परेशानी अनुभव गर्ने भएको र आफ्नू सुख सामर्थ्य कायम राख्न केही अपठेरो अनुभव गर्ने खालको र आफू भित्र ठूलो ओज राख्नेवाला र भोग-विलासको बढी इच्छुक तथा आफ्नू उन्नतिका लागि बर्ता दौड-धूप गर्ने र लामा बाहु भएको र धेरै वर्ता सुखको इच्छा गर्ने तथा जिद्दी-हठी, परिश्रमी, साहसी र हिम्मती होला।

कु० नं० ९३९

९ ७ १० ८श. ६ ११ ५ १२ २ ४ १ ३

जुन व्यक्तिको धन राशिको शनिश्चर लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस धेरै भूमि-भवन हुने र त्यसको आमदानी पाउने अर्थात सम्पत्तिरूपी धन-संग्रहको शक्तिद्वारा परम सुख अनुभव गर्ने खालको तथा मातृस्थानको सुखमा केही बन्धन पाउने भएको तथा राम्रो आमदानी, सुख सम्बन्धी अनेक लाभ प्राप्त गर्ने, दाजु-भाइ दिदी-बहिनीको केही बन्धन र वृद्धि पाउनेवाला र कुटुम्ब वृद्धिका साथै हानि वा न्यूनताको योग पाउने र धनको पक्षमा प्रथम हानि अनि वृद्धि पाउने भएको, आयुमा र दैनिक दिनचर्यामा सुख अनुभव गर्ने र धन-वृद्धिका लागिनै पुरुषार्थ गर्दै रहने भएको र सुख-दुःख समान ठानेर सहने खालको होला।

कु० नं० ९४०

९श. ७ १० ८ ६ ११ ५ १२ २ ४ १ ३

जुन व्यक्तिको मकर राशिको शनि लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस ठूलो पुरुषार्थी र सुखपूर्वक ठूला-ठूला कार्य गर्ने भएको र दाजु-भाइ दिदी-बहिनीको सुख प्राप्त गर्नेवाला, बुद्धिमा बर्ता तेजी राख्ने खालको र अनेक थरिका कुराहरूले धेरै काम बनाउने भएको तथा धेरै बर्ता धन-व्यय गर्नेवाला एवं सन्तान पक्षमा अलि ढीलो वृद्धि पाउनेवाला, अनि भूमि-भवनको केही शक्ति राख्ने भएको तथा भाग्य वृद्धिका लागि प्रयत्न गर्दै रहने खालको, माताको सम्पर्क योगबाट बल प्राप्त गर्ने भएको र अनेक थरिका विद्याहरूको र गुणहरूको संग्रह गर्ने चेष्टा भएको एवं बुद्धि र वाणीद्वारा उचितानुचित कुरा सुनाउने बलियो बानी भएको, आफ्नै बलबाट अन्यान्य स्थानको सम्पर्क शक्तिको निकै राम्रो सहयोग पाउने भएको तथा अन्य स्थानबाट धेरै ठूलो सुखको आनन्द प्राप्त गर्ने खालको व्यक्ति होला।

कु० नं० ९४१

९, ७, १० श., ८, ६, ११, ५, १२, २, ४, १, ३

जुन व्यक्तिको कुम्भ राशिको शनि लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस धेरै बर्ता धन सम्पत्ति भएको, भूमि-भवनको सुख प्राप्त गर्ने खालको र माताको शक्तिबाट लाभ र सुख प्राप्त गर्ने भएको र मातृ-स्थानबाट शक्ति स्वतः पाउनेवाला र दाजु-भाइ दिदी-बहिनीको सुख प्राप्त गर्नेवाला र मामाको पक्षमा केही हानि पुऱ्याउने भएको र मावली पक्षबाट केही न्यूनता, दुर्बलता पाउने खालको र शत्रु पक्षबाट केही अशान्ति अनुभव गर्ने भएको तथा सुख-शक्तिको परिधिअनुसार आफ्नू शरीर र आत्मामा सुखको कमी वा न्यूनता अनुभव गर्ने खालको र पिता-स्थानमा पनि केही सुखको सम्बन्धबाट कमीको योग पाउनेवाला अनि गुप्त दाउ-पेंच चल्न जान्ने खालको व्यक्ति होला।

कु० नं० ९४२

९, ७, १०, ८, ६, ११श., ५, १२, २, ४, १, ३

जुन व्यक्तिको मीन राशिको शनि लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस निकै तीव्र बुद्धिवाला र धेरै विद्या जान्ने तथा बुद्धिद्वारा कुराकानीमा केही कठोरता र उत्तेजनाहरूबाट काम सिद्ध पार्न जान्ने एवं सन्तान पक्षमा केही वृद्धि पाएर पनि केही नीरसता पाउने भएको र मातृ स्थानबाट आउने विपत्तिको वास्ता नगर्ने तथा व्यापारको लाइनमा उन्नति गर्ने भएको अनि धन संग्रहको निम्ति बढी प्रयत्न गरि रहनेवाला, स्त्री सुखमा विशेष आसक्ति राख्ने खालको र अकस्मात आमदानी पाउनेवाला र धन-जनको सम्बन्धमा केही बढीभन्दा पनि निकै बर्ता उन्नतिको चेष्टा गर्दै रहने भएको, धेरै भोग सुख प्राप्त गर्नेवाला र भूमि स्थानबाट पाउने सुख शक्तिको तागतलाई मस्तकमा धारण गर्ने खालको साहसी व्यक्ति होला।

कु० नं० ९४३

९ ७ १० ८ ६ ११ ५ १२ श. २ ४ १ ३

जुन व्यक्तिको मेष राशिको शनि लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस माताको सुखमा हानि पाउनेवाला र मातृ-स्थानको कमी (न्यूनता) पाउनेवाला र दाजु-भाइसित विरोध वा वैमनस्यता पाउने भएको र आफ्नू गुप्त तागतले निकै पुरुषार्थ गर्ने खालको तथा गुप्त साहसवाला, मावली पक्षबाट हानि पाउनेवाला, कुनै रोगमा केही बन्धन या शक्ति क्षीणताको केही अनुभव गर्ने भएको र कुनै प्रकारले केही शत्रु पक्षमा कहिले काहीं क्लेशको अनुभव गर्ने खालको र जीवनमा केही शक्ति वा सुखको योगद्वारा दिनचर्या यथाक्रम व्यतीत गर्नेवाला र धन बढी व्यय गर्न अघिसर्ने खालको, अन्य स्थानको सम्बन्धमा केही शक्ति र सुख प्राप्त गर्ने भएको तथा बिस्तार-बिस्तार शक्ति सम्बन्ध बढ्ने भएको एवं उल्टा र बांगा योजनाहरूबाट सफलता पाइरहने भएको साहसी व्यक्ति होला।

कु० नं० ९४४

९ ७ १० ८ ६ ११ ५ १२ २ ४ १श. ३

जुन व्यक्तिको वृष राशिको शनि लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस गृहस्थ जीवनमा धेरै सुख पाउनेवाला र घरकी सम्पत्तिरूपी स्त्री

कु० नं० १४५

९ ७
१० ८ ६
११ ५
१२ २श. ४
१ ३

वा दैनिक व्यापारको स्थानबाट बढी सुख प्राप्त गर्ने भएको एवं शक्ति हस्तगत गर्नेवाला र स्त्री तथा मातृ सम्बन्धबाट गृहस्थी सुखको उदय पाउनेवाला, भाइ-बन्धुहरूको वास्ता नराख्ने भएको र भाग्यको उन्नतिमा सकेसम्म बल लगाउनेवाला तथा व्यापारमा दृढताको योगबाट सुख-शक्तिको संचार गर्न जान्ने खालको र भोगमा बढी आसक्ति राख्ने भएको, शरीर थकित हुनाले दुःखी रहनेवाला, व्यापारको उन्नतिको लागि पूरा शक्ति लगाउने भएको र व्यापारमा निकै ठूलो उत्साहले काम गर्ने भएको तथा अर्कालाई सुख-शान्ति पुऱ्याउने कामको पनि ध्यान राख्ने खालको व्यक्ति होला।

जुन व्यक्तिको मिथुन राशिको शनि लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस मातृ–पक्षको सुखमा हानि पाउनेवाला र दाजु-भाइ दिदी-

कु० नं० १४६

९ ७
१० ८ ६
११ ५
१२ २ ४
१ ३श.

बहिनीका तर्फबाट अशान्तिको योग पाउने भएको, मातृस्थान र भूमियोगको केही न्यूनता पाउनेवाला तथा पुरुषार्थमा कमजोरी पाउने भएको, आयुमा वृद्धि पाउने र पितास्थानमा अशान्ति सहित क्लेश पाउने भएको, वृद्धि स्थानमा र कुरा-कानीमा बढी शक्तिको प्रयोगबाट सुख प्राप्त गर्नेवाला र बोल्न जान्ने उदार कहलिएको तथा सन्तान पक्षमा केही विरोध शक्तिको साथसाथै वृद्धि पाउने खालको, विदेश आदिमा जाने भएको, पुरातत्त्व शक्तिको लाभ प्राप्त गर्ने अनि बर्ता परिश्रमबाट सुख प्राप्त गर्ने भएको तथा धन-वृद्धिका लागि निकै ठूलो प्रयत्न गर्नेवाला होला।

जुन व्यक्तिको कर्क राशिको शनि लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस बढी पुरुषार्थी सुन्दर सुखद काम गर्नेवाला, भाग्यमानीमा गनिने भएको, प्रसस्त लाभ पाउनेवाला, धन कमाउनमा निकै सामर्थ्य राख्ने भएको, दाजु-भाइको सहयोग पाउने अनि आमाको र भाइको सहयोग पाउने अनि आमाको र भाइको सहायक शक्ति पाउनेवाला, परिश्रमद्वारा सुख सम्मान र यश एवं साहस प्राप्त गर्ने खालको, विपक्षीहरूलाई केही अनुचित काइदाले थिच्ने भएको र सुख एवं सामर्थ्यको दृष्टिले प्रभावमा केही न्यूनता पाउनेवाला, मावली पक्षले कमजोरीमा केही सुख प्रदान गर्ने र धर्म एवं ईश्वरको श्रद्धा भक्तिमा सुख-सन्तोष मान्ने भएको, बढी परिश्रमले आत्तिनेवाला भवन-भूमिको स्वामी होला।

कु० नं० १४७

९ ७
१० ८ ६
११ ५
१२ २ ४श.
१ ३

जुन व्यक्तिको सिंह राशिको शनि लग्नबाट दसौं स्थानमा छ भने त्यो आफ्नू कटु पुरुषार्थबाट प्रभाव जमाउन सक्ने तथा पिता र दाजु-भाइलाई केही कष्टले सम्मान दिने र बढी धन खर्च गर्ने खालको र अन्य स्थानको सम्पर्क सुख केही दृढताले पाउनेवाला, मातृस्थानको प्रभाव पाउने र खूब दृढताले व्यापार गर्न जान्ने, भवन-भूमिको स्वामी तथा आफ्नू मान उन्नतिको लागि केही कष्ट-बाधा सहने खालको तर कुनै पनि दुःख कष्टको वास्ता नगर्ने एवं हठ्योगद्वारा काम मिलाउन सक्ने अनि सुखपूर्वक काम गर्ने खालको तथा तामसी कर्म गर्नेवाला, स्त्री स्थानबाट सुख र भोग प्राप्त गर्ने खालको होला।

कु० नं० १४८

९ ७
१० ८ ६
११ ५श.
१२ २ ४
१ ३

जुन व्यक्तिको कन्या राशिको शनि लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस आफ्नो पुरुषार्थद्वारा सुखपूर्वक धेरै आमदानी प्राप्त गर्नेवाला र दाजु-भाइ दिदी-बहिनीको सम्पर्कको लाभ पाउने भएको र मातृस्थानको कारणले सुख पाउनेवाला तथा परिश्रमको कारणले र लाभको कारणले सुखको सम्बन्धमा शरीर र आत्माको बीचमा केही अशान्तिको योग पाउने भएको र बुद्धिमा र वाणीमा वर्ता चंचलता या अधिकताद्वारा काम सिद्ध पार्न जान्ने र दिनचर्यामा सुख-शान्तिको योग पाउनेवाला र लामू आयु पाउने भएको, आफ्नू भवन-भूमिको लाभ पाउने खालको र आमदानीको वृद्धिमा सम्पूर्ण शक्ति लगाउनेवाला अनि त्यसैले सुख प्राप्त गर्ने खालको होला।

कु० नं० ९४९

९ ७
१० ८ ६श.
११ ५
१२ २ ४
१ ३

जुन व्यक्तिको तुला राशिको शनि लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस आफ्नू शक्तिद्वारा बलपूर्वक विशेष खर्च गर्ने भएको तथा बढी व्ययको कारणले नै बर्ता सुख मान्नेवाला एवं अन्य स्थानहरूबाट नै विशेष शक्ति र सुख प्राप्त गर्ने भएको अनि दाजु-भाइ दिदी-बहिनीको र मातृस्थानको बढी भइसकेपछि निकै विलम्बले सुख पाउने खालको तथा धनको त्रुटि, कमजोरी भए पनि धनके निम्ति अन्य स्थानको सम्पर्क शक्तिद्वारा पनि उन्नतिमा बराबर लागिरहने खालको अनि मावली पक्षबाट न्यूनता पाउनेवाला तथा भाग्यको उन्नतिका लागि विशेष प्रयत्न गर्नेवाला, धर्म र ईश्वरमा पूर्ण आस्था राख्ने भएको र शत्रु-पक्षमा केही दुर्बलता मान्नेवाला अनि शत्रु पक्षका लागि कुनै लुकेको गुप्त चाल चल्ने खालको तथा अन्यस्थानको साहस र हिम्मत पाउने खालको होला।

कु० नं० ९५०

९ ७श.
१० ८ ६
११ ५
१२ २ ४
१ ३

# वृश्चिक लग्नान्तर-राहुफलम्

जुन व्यक्तिको वृश्चिक राशिको राहु लग्नबाट प्रथम स्थानमा छ भने त्यो मानिस शरीरमा दुर्बलता पाउनेवाला र शरीरमा अनेक पल्ट आघात सहनेवाला शरीरमा कुनै प्रकारले चिन्तित रहेर अनेक कष्ट अनुभव गर्ने भएको अनि कठिन एवं कठोर नीतिलाई गुप्त रीतिले व्यवहारमा ल्याउन जान्ने भएको तथा शील स्वभावको पालन गर्न नसक्ने खालको अनि केही महान् शक्तिलाई प्राप्त गर्ने बडो बलियो चाल चल्ने भएको र अनधिकार सफलता पाउने कुनै बांगो युक्ति झिक्न जान्नेवाला र अनधिकार सफलता पाउनकोलागि बांगा युक्तिहरू झिक्नेवाला तथा बारम्बार विपत्ति पाएर पनि मनमा निराश या निष्फल पूर्णरूपेण नहुने खालको, निकै साहसी र बाठो व्यक्ति होला।

कु० नं० ९५१

९ ७
१० ८रा. ६
११ ५
१२ २ ४
१ ३

जुन व्यक्तिको धन राशिको राहु लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस धन र जन एवं कुटुम्बको क्लेश सहन गर्ने भएको अर्थात धनको न्यूनता र धनको हानि धेरैपल्ट सहनु पर्ने भएको र कुटुम्बमा पनि हानि र कमी तथा क्लेश पाइरहने भएको अनि धनको सम्बन्धमा ऋण लिएर पनि काम चलाउने खालको र धनको सम्बन्धबाट क्षोभ, ईर्ष्या र अपमान सहन गर्ने भएको तथा धन प्राप्तिको लागि कष्टसाध्य र क्षुद्र कर्म पनि गर्नेवाला किन्तु धनको बलियो शक्ति पाउनको लागि बढी प्रयत्नशील रहेर र महान् निराशाहरूपछि कुनै अप्रत्याशीत तत्व-शक्ति प्राप्त गर्नेवाला तथा गरीब युक्तिले बाँच्ने खालको होला।

कु० नं० ९५२

९रा. ७
१० ८ ६
११ ५
१२ २ ४
१ ३

जुन व्यक्तिको मकर राशिको राहु लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस निकै पराक्रमी र ठूलो पुरुषार्थ तथा बढी हिम्मत भएको, काम-काज गर्नमा निकै स्फूर्ति देखाउने खालको र आफ्नू कठोर परिश्रमद्वारा केही बाधा-कष्टपछि कुनै महान शक्ति फेलापार्ने वाला र निराशाहरूमा नआत्तिने खालको निकै जबरदस्त युक्तिहरू द्वारा उन्नतिको मार्गमा हिंड्दै रहेर सफलता पाउने भएको, दाजु-भाइको विरोध गर्नेवाला, कहिले काहीं हिम्मत त्याग्ने र कमजोरी पाउने अवसर आएर पनि धैर्यले काम लिन जान्ने, विजयी, बहादुर प्रकृति भएको व्यक्ति होला।

कु० नं० ९५३

९ ७
१० रा. ८ ६
११ ५
१२ २ ४
१ ३

जुन व्यक्तिको कुम्भ राशिको राहु लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस मातृस्थानमा केही न्यूनता पाउने भएको तथा सुख स्थानमा अलिकति कमी र क्लेश सहने खालको तथा केही झञ्झट-युक्त घरेलू वातावरणले गर्दा केही अशान्ति पाउनेवाला एवं सुखका साधनहरू पाउनको लागि चाहिने भन्दा बर्ता प्रयत्न गर्ने भएको तथा सुख शक्तिलाई निकै बलियो काइदाले पाइसकेपछि सन्तुष्ट हुने वाला, त्यसमा केही अपूर्ण नै भए पनि कुनै आपत्ति नमान्ने खालको, बढी प्राप्तिका लागि ठूला-ठूला युक्तिहरूले इच्छा पूर्ण गर्ने खालको व्यक्ति होला।

कु० नं० ९५४

९ ७
१० ८ ६
११रा. ५
१२ २ ४
१ ३

जुन व्यक्तिको मीन राशिको राहु लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस धेरै बढी बुद्धिमान, स्वार्थका कुराहरू बूढा-पुराना झैं किसिमले भन्ने

कु० नं० ९५५

९ ७
१० ८ ६
११ ५
१२ रा. २ ४
१ ३

भएको, सत्य-असत्यको वास्ता नगर्ने भएको, सन्तान पक्षबाट केही कष्ट सहनेवाला, विद्या ग्रहण गर्ने वेलामा केही कष्टबाधा सहनेवाला एवं बुद्धिमा केही चिन्तायुक्त रहेर काम गर्नेवाला, कुरा-कानी गर्दा मीठोसित बोल्न नसक्ने भएको, बुद्धि र विद्याको गम्भीरता र तत्त्वको खोजी गरेर आफ्नू मतलबका कुरा मात्र ग्रहण गर्नेवाला, दिमागमा एक प्रकारको उदासीनता राख्ने अर्थात आफ्नू विचारलाई ठीक र उत्तम मान्ने खालको व्यक्ति होला।

जुन व्यक्तिको मेष राशिको राहु लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस निकै प्रभावशाली, शत्रुमा विजय पाउनेवाला, मावली पक्षबाट हानि

कु० नं० ९५६

९ ७
१० ८ ६
११ ५
१२ २ ४
१रा. ३

पाउने भएको तथा स्वार्थ सिद्धिका योजनाहरूलाई निकै दरिलो काइदाले व्यवहारमा ल्याउन जान्ने भएको निकै साहस र अभिमान द्वारा काम सिद्ध पार्न जान्ने खालको, शील र सन्तोषको पालन गर्न नसक्ने भएको अनि विजयी हुनका लागि थरि-थरिका गहीरा चाल चल्ने, आफ्नो प्रभाव कायम राख्नका लागि जतिसुकै आपत्ति-विपत्ति सहनु परे पनि सहन सक्ने तर कुनै न कुनै बलियो युक्ति पाएर नै सन्तोष मान्ने भएको, निकै सतर्क, बडो होशियार र विपत्ति वा रोगको कुनै वास्ता नगर्ने भएको र धैर्यपूर्वक काम सिद्ध पार्ने, बडो बाठो कूटनीतिज्ञ होला।

जुन व्यक्तिको वृष राशिको राहु लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस दैनिक व्यापारको सन्बन्धमा निकै ठूला-ठूला सतर्कता र चातुर्यहरूले

कु० नं० १५७

९ ७
१० ८ ६
११ ५
१२ २रा. ४
१ ३

काम सिद्ध पार्न जान्ने र बढी परिश्रम तथा भेदपूर्ण युक्तिहरूले व्यापारलाई पारीपट्टि पुऱ्याउन जान्ने भएको र स्त्री-स्थानमा केही क्लेश सहन गर्ने खालको र स्त्री पक्षसित सम्बन्धित प्रत्येक विषयमा केही भेदनीति वा युक्तिहरूले काम सपार्न जान्ने भएको, गृहस्थीको सम्बन्धमा केही विघ्न-बाधा अनुभव गर्दै रहे पनि निकै सावधानी र चातुर्यहरू द्वारा आफ्नू दुर्बलता देखापर्न नदिने खालको र लौकिक प्रणालीमा उत्तम सफलता पाउनका लागि सकेसम्म चेष्टा गरेर सदैव उन्नतितिर दगुरिरहने भए पनि मनमा केही अशान्ति पालिरहने व्यक्ति होला।

जुन व्यक्तिको मिथुन राशिको राहु लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस आफ्नू जीवनमा निकै ठूलो शान अभिमान ठान्ने खालको तथा

कु० नं० १५८

९ ७
१० ८ ६
११ ५
१२ २ ४
१ ३रा.

ठूलो उद्दण्डता र चुरिफुरि देखाउनेवाला एवं पुरातत्त्वको गूढ फाइदा पाउने भएको र गहीरो खाडलमा लुकेको विषयमा धेरै नै बर्ता गहीरो विचारले सोच्ने र अत्यन्त नै गहीरो चाल चल्न जान्नेवाला र आयुमा उन्नति पाउने भएको तर जीवनको दिनचर्यामा केही देखौवा आडम्बरको प्रतिस्पर्धामा भित्री केही न्यूनता वा कमी अनुभव गर्ने भएको र पुरातत्त्व शक्तिलाई कुनै पनि काइदाले अनधिकार या विशेष फाइदा पाउनेवाला तथा ठूलो स्थान छेक्न जान्ने चिन्ताग्रस्त व्यक्ति होला।

जुन व्यक्तिको कर्क राशिको राहु लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस आफ्नू भाग्यमा अनेक चिन्ताहरू पाउने र भाग्यमा विषाद मात्रेवाला र धर्म तथा ईश्वरको सम्बन्धमा वास्तविक न्यूनता पाउने भएको, शील सत्वगुणको पालन राम्रोसित गर्न नसक्ने खालको र मानसिक कष्ट सहने, अपयश पाउने र भाग्योन्नतिको निकै चिन्तापछि निकै लामो समयमा भाग्यवृद्धि पाउने भएको, तैपनि भाग्यस्थानमा कुनै न कुनै विघ्न बाधा र अशान्तिको वातावरण पाउने र भाग्यको सम्बन्धमा अनेकानेक मानसिक आघात सहदै रहे पनि कुनै गहीरो तत्त्वको खोजी गरिरहने खालको होला।

कु० नं० ९५९

९ ७
१० ८ ६
११ ५
१२ २ ४रा.
१ ३

जुन व्यक्तिको सिंह राशिको राहु लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस पितास्थानमा हानि र क्लेश पाउने भएको तथा राजसमाजबाट पनि एवं राजयोगमा पनि कण्टक पाउनेवाला, अनि मान-उन्नति या पद-उन्नतिमा विफल हुने खालको र व्यापारादि कारबारमा अनेक झंझट सहने भएको र उन्नतिको मार्गमा विघ्न-बाधा पाउनेवाला तर उन्नति प्राप्त गर्नका लागि ठूलोभन्दा पनि ठूलो परिश्रम सहने खालको र अपठेरा र झ्याउलाबाट नआत्तिएर कटुभन्दा पनि कटु तीक्ष्ण युक्तिहरूलाई व्यवहारमा ल्याउन जान्ने र धर्म-कर्मको कुनै राम्रो र उत्तम नियम पालन गर्न नसक्ने व्यक्ति होला।

कु० नं० ९६०

९ ७
१० ८ ६
११ ५रा.
१२ २ ४
१ ३

जुन व्यक्तिको कन्या राशिको राहु लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस धेरै नै धन कमाउने तथा बढी आमदानी पाउने भएको तथा आमदानीको सम्बन्धमा कुनै न कुनै युक्तिका कारणबाट यौटा दरिलो तहमा पुग्न सक्ने अनि केही अपुताली जस्तो धन पाउने पनि संयोग भेट्नेवाला, आमदानी वा कुनै पनि किसिमको प्राप्तिको सम्बन्धमा बडो तत्परताले लड्न तयार हुने तर पनि केही न्यूनता अनुभव गर्ने खालको, धन प्राप्तिको सम्बन्धमा सत्य असत्यको न्यायको वास्ता नगर्ने अनि स्वार्थसिद्धितिर नै लम्कने तथा सतर्क व्यक्ति होला।

कु० नं० ९६१

९ ७ १० ८ ६रा. ११ ५ १२ २ ४ १ ३

जुन व्यक्तिको तुला राशिको राहु लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस धेरै धन खर्च गर्ने, खर्चको सम्बन्धमा केही बाहिरी सम्पर्क पाउने भएको र खर्चको लागि धेरै ठूला युक्तिहरूबाट काम मिलाउन जान्नेवाला र खर्चको सम्बन्धमा बाधा-कष्ट पनि सहने खालको तर खर्च शक्तिलाई दरिलो रीतिले प्राप्त गर्नका लागि विपत्तिहरूको वास्ता नराख्ने खालको र अन्य स्थानको सम्पर्कमा अनेक ठूला भेद युक्तिहरूद्वारा काम पूर्ण पार्ने र खर्चको मामलामा केही सित्तैको झैं योजनाको पनि लाभ पाउने भएको र खर्चको पंक्तिबाट केही चिन्तित भावले सदैव पारी वर्लने भएको व्यक्ति होला।

कु० नं० ९६२

९ ७रा. १० ८ ६ ११ ५ १२ २ ४ १ ३

# वृश्चिक लग्नान्तर-केतुफलम्

जुन व्यक्तिको वृश्चिक राशिको केतु लग्नबाट प्रथम स्थानमा छ भने त्यो मानिस शरीरको सम्बन्धमा केही कमजोरी पाउनेवाला र शरीरमा केही घाउ-फोडा इत्यादिको योग पनि पाउनेवाला, भित्री हृदयमा बडो धीरता राख्न सक्नेवाला र आफ्नू जथाभावी शक्तिको सामुन्ने कुनै पनि अन्य व्यक्तिको वास्ता नगर्ने खालको र वीर भेष वा वीरस्वभाव मनपराउने तथा हृदयमा ज्ञानको न्यूनता (कमी) अनुभव गर्ने भएको र केही गुप्त युक्तिहरूद्वारा गहीरो लाभ विचार गरेर फाइदा पाउनेवाला अनि काम-शक्ति बर्ता भएको र बर्ता परिश्रम सहन गर्न सक्ने र कहिले काहीं अनेक थरिका विपत्ती र बर्ता परेशानी सहने खालको चिन्तित र गम्भीर एवं साहसी र बाठो व्यक्ति होला।

कु० नं० ९६३

९ ७
१० ८के. ६
११ ५
१२ २ ४
१ ३

जुन व्यक्तिको धन राशिको केतु लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस धन स्थानमा ठूला-ठूला जबरदस्त युक्तिहरू द्वारा धन वृद्धिको प्रयत्न गर्ने खालको र धनको सम्बन्धमा निकै ठूलो उच्चता देखाउनेवाला र कुटुम्ब वृद्धिको यौटा निकै ठूलो झ्याउलो झैं पाउनेवाला र धनीवर्गको झैं यौटा निकै ठूलो आडम्बर झैं पाउनेवाला र धनको वास्तविक परिस्थितिमा यौटा बडो न्यूनता अनुभव गर्ने भएको र धन समूहको प्राप्तिका लागि यौटा उच्च योजना बनाएर एक उच्च दाउ खेल्नेवाला र धनको विशेष प्राप्ति गर्नको सम्बन्धमा कुनै गहीरो विपत्ति पनि पाउने खालको व्यक्ति होला।

कु० नं० ९६४

९के. ७
१० ८ ६
११ ५
१२ २ ४
१ ३

जुन व्यक्तिको मकर राशिको केतु लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस निकै बहादुर प्रकृतिको, लामा बाहु भएको र बर्ता परिश्रम गर्नेवाला, केही वियोग पाउने भएको र कुनै कार्यसिद्धिको तहसम्म पुग्नलाई जति सुकै असफलता आइपरे पनि सदैव उत्साहयुक्त भएर आफ्नू काममा अगाडि बढ्दै रहने खालको र अन्त्यमा कुनै दरिलो शक्तिलाई प्राप्त गर्नेवाला र स्थिर अडिएको कामलाई नै गर्न मनपराउने भएको, स्वार्थयुक्त नीतिवाला व्यक्ति होला।

कु० नं० ९६५

९ ७
१० के. ८ ६
११ ५
१२ २ ४
१ ३

जुन व्यक्तिको कुम्भ राशिको केतु लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस मातृस्थानमा केही कमी पाउनेवाला र भूमिस्थान एवं भूमि-भवन सम्पत्तिको पनि केही कमी पाउनेवाला र सुखको साधनहरूमा पनि न्यूनता पाउनेवाला र जन्म स्थानबाट पनि केही भिन्नता पाउनेवाला तथा सुखका साधनहरूको प्राप्तिको लागि कुनै बलियो मार्ग पाउनेवाला र जबसम्म सुखको मजबूती नपाए सम्म अनेक थरिका युक्ति बल र परिश्रमद्वारा सुख प्राप्तिको साधनहरूमा लागि रहनेवाला र घर भित्रको वातावरणमा केही अशान्तिको कारण पाउने खालको व्यक्ति होला।

कु० नं० ९६६

९ ७
१० ८ ६
११के. ५
१२ २ ४
१ ३

जुन व्यक्तिको मीन राशिको केतु लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस आफ्नू वृद्धिमा चिन्ता पाउनेवाला तथा विद्याध्ययनमा ठूला-ठूला

कु० नं० ९६७

९　७
१०　८　६
११　५
१२ के.　२　४
१　३

विघ्न-बाधाहरू पाउने खालको तर विद्याग्रहण गर्नेको सम्बन्धमा बडो धैर्यले काम लिनेवाला र सन्तान पक्षमा कष्टको अनुभव गर्नेवाला र आफ्नो मन्तव्यलाई आफ्नू वाणीद्वारा अन्यलाई राम्ररी बुझाउनमा कष्ट अनुभव गर्नेवाला, बोलचालमा केही बलजफतीले काम गर्ने, बुद्धिमा केही कमी अनुभव गर्नेवाला, केही गुप्त युक्तिद्वारा कुराकानी गर्नेवाला, शीलोल्लंघन गर्नेवाला, जिद्दी स्वभावको व्यक्ति होला।

जुन व्यक्तिको मेष राशिको केतु लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस वीर बडो बहादुर स्वभाव भएको र शत्रुपक्षमा विजय पाउने भएको

कु० नं० ९६८

९　७
१०　८　६
११　५
१२　२　४
१ के.　३

र आफूमाथि आइपर्ने कतिपय विपत्तिहरूको वास्ता नगर्ने खालको र अनेक रोग झ्याउलोहरूको बढी सावधानी र मुस्तैदीले हटाइदिने खालको तथा मावली पक्षमा हानि पाउनेवाला अनि आफ्नू सुरक्षा र बचाउको निकै राम्रो र गहीरो उपाय वा साधन जुनवेला पनि तयार राख्नेवाला र निकै दरिलो र गहीरो युक्तिले काम सपार्न जान्ने खालको अनि आफ्नू स्वार्थ सिद्धिको पूरा ध्यान राख्ने भएको र शील सन्तोषको अलिकति पनि वास्ता नगर्ने भएको, केही दुर्बलता वा न्यूनता आफूभित्र सोच्ने भए पनि नडराउने खालको व्यक्ति होला।

जुन व्यक्तिको वृष राशिको केतु लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस स्त्री स्थानमा केही कष्टसहन गर्ने भएको र दैनिक व्यापारको क्रममा केही बाधा-कष्ट सहन गर्ने भएको, व्यापारको पक्षमा परिश्रम र धैर्यले काम सिद्ध पार्न जान्ने खालको तथा व्यापारमा कहिले काहीं महान् कष्ट आइलागे पनि निश्चेष्ट र मनमा निराश नहुने खालको, गृहस्थीको सम्बन्धमा महान् विघ्न-बाधा र झ्याउलो सहन गर्ने भएको, ठूला-ठूला युक्तिहरूद्वारा साहस र हिम्मतले आफ्नू काम पूरा गर्न जान्नेवाला, बढी मैथुन प्राप्त गर्ने भएको, व्यापारको क्रममा कुनै पनि परिस्थितिमा रहेर पनि केही न केही दृढता वा मजबूती पाएर छाड्नेवाला, लौकिक कार्यहरूमा भित्री कमजोरी भए पनि निस्फिक्री शरीरको प्रयोग गर्ने खालको होला।

कु० नं० १६९

९ ७
१० ८ ६
११ ५
१२ २के. ४
१ ३

जुन व्यक्तिको मिथुन राशिको केतु लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस आफ्नू जीवन कालमा बढी दुःख अनुभव गर्ने भएको र अशान्तिप्रद रहने भएको अनि बढी गूढ भन्दा पनि गूढ युक्तिहरूमा पनि गूढ र संकीर्ण युक्तिहरूको प्रयोग गर्ने खालको तथा पुरातत्त्व धनको लाभमा हानिको योग प्राप्त गर्नेवाला, आयुमा केही न्यूनताको विचार गर्ने भएको अनि दिनचर्यामा कुनै गल्ढ्यांग्रो किसिम पाउने खालको सामान्य रहन-सहन हुने भएको, पेट वा गुदामा केही खराबी र कब्जियतको शिकायत पाउनेवाला तथा जीवनमा केही दुरुपयोग पाउने भए पनि मनभित्र साहस र हिम्मत भएको होला।

कु० नं० १७०

९ ७
१० ८ ६
११ ५
१२ २ ४
१ ३के.

जुन व्यक्तिको कर्क राशिको केतु लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस आफ्नू भाग्यमा ठूला अशान्तिहरूको योग पाउने खालको तथा भाग्योन्नतिको पूर्ण विकासका लागि धेरै दिनसम्म प्रतीक्षा गर्ने भएको अनि धर्मको सम्बन्धमा न्यूनता पाउनेवाला तथा आफ्नू भाग्यमा विषाद गर्ने भएको एवं भाग्यमा कहिले काहीं ठूला-ठूला आघात सहनेवाला एवं भाग्योन्नतिका लागि निकै गहीरो लाभदायक योजना पाउने भएको अनि भाग्योन्नतिका लागि बडो जबरदस्त लाभको चाल चल्नेवाला र अन्त्यमा कुनै बलियो शक्तिमा पुग्नेवाला तथा ईश्वर भक्तिको पूरा साधन भेट्न नसक्ने खालको तथा कुनै कमजोर धर्मको पालन गर्ने खालको होला।

कु० नं० १७१

९　७　१०　८　६　११　५　१२　२　४के.　१　३

जुन्न व्यक्तिको सिंह राशिको केतु लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस पिता स्थानमा केही हानि र न्यूनता पाउने भएको एवं राज समाजमा बाधा पाउनेवाला तथा पदोन्नति या मानोन्नतिमा विघ्न बाधा पाउनेवाला एवं उन्नति र व्यापारादिमा ठूला-ठूला झ्याउला तथा विपत्तिहरू सहनेवाला, उन्नतिको निम्ति निकै परिश्रम गरेको धेरै दिनपछि सफलताको नजीक निकै अबेरमा पुग्ने भएको तथा आफ्नू इज्जत र सम्मानमा केही कमी (न्यूनता) अनुभव गर्नेवाला किन्तु भित्री हृदयमा केही दृढता राख्ने र साहसवाला, धैर्यले काम बनाउने होला।

कु० नं० १७२

९　७　१०　८　६　११　५के.　१२　२　४　१　३

जुन व्यक्तिको कन्या राशिको केतु लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस धेरै आमदानी पाउनेवाला, आमदानीको घेरामा एक प्रकारको मजबूती पाउने भएको, लाभ प्राप्तिको सम्बन्धमा निकै तत्परता र दृढताले काम गर्ने खालको, धन-शक्ति पाउनको लागि आफ्नू विशेष शक्तिको प्रयोग गर्नेवाला, भविष्यको जाती नजातीको वास्ता नगर्ने र स्वार्थसिद्धिको ध्यान राख्ने भएको तथा केही अपुताली झैं पाउने खालको एवं कहिले काहीं आमदानीमा कुनै गहीरो आघात सहनेवाला तर साहस तथा बहादुरीले सदैव आफ्नू कामको फाइदा पाउने व्यक्ति होला।

कु० नं० १७३

जुन व्यक्तिको तुला राशिको केतु लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस बढी खर्च गर्ने भएको तथा खर्चको सम्बन्धमा ठूला युक्तिहरूले र धैर्यताबाट काम सिद्ध पार्ने र खर्चको शैलीलाई दह्रो हिसाबले चलाउनेवाला र खर्चको शक्तिमा कुनै बलियो बाटो फेला पार्ने भएको र खर्चको सम्बन्धमा कहिले काहीं कुनै गरीरो आघात पाएर खर्च चलाउनमा आफूलाई बढी असमर्थ पाउने खालको, खर्चको सम्बन्धमा केही कष्ट-बाधाले युक्त अन्य स्थानको सहयोग सम्बन्धको कारण पनि पाउने भएको, खर्च-शक्तिको दृढता कायम राख्नका लागि आफ्नू असीमित शक्तिको प्रयोग गर्ने खालको साहसी व्यक्ति होला।

कु० नं० १७४

# धनु लग्न हुनेहरूको- भविष्यका तारीख

सन् १९९६ को वर्षमा- गुरू नीचको भएर दोस्रो स्थानमा चल्ने छन्, यसै निम्ति धनको पक्षमा र स्वास्थ्यको पक्षमा कष्ट रहला। ता० ७/१/९६ देखि भाग्यको समय राम्रो रहला। ता० १५/५/९६ देखि भाग्यमा न्यूनता आउला। ता० १५/६/९६ बाट व्यापारमा सफलता रहला। ता० १५/७/९६ देखि फेरि कष्ट रहने छ। ता० ३/९/९६ बाट भाग्यको उत्तम समय रहला। ता० १६/१०/९६ सम्म लाभ रहला, त्यसपछि समय केही दुर्बल रहने छ। ता० १६/१२/९६ बाट ता० ३१/१२/९६ सम्ममा भाग्योन्नतिको समय रहने.छ।

कु० नं० ९७५

१० ८
११ ९ ७
१२ ६
१ ३ ५
२ ४

सन् १९९७ को वर्षमा- ता० १/१/९७ बाट भाग्यको समय राम्रो रहने छ। ता० २३/१/९७ बाट खर्च बढी रहला। ता० १३/२/९७ बाट पुरुषार्थले नै भाग्यको सफलता रहने छ। ता० २२/४/९७ देखि लाभमा न्यूनता आउला ता० ३/६/९७ देखि व्यापार र गृहस्थीमा सफलता मिल्ला।ता० २२/६/९७ देखि उन्नतिमा आंशिक बाधा पर्ला। ता० २८/८/९७ देखि ता० १७/१०/९७ सम्म भाग्योन्नति बलिरहला, त्यसपछि भाग्यमा कमी आउला। ता० १६/१२/९७ बाट ३१/१२/९७ सम्म भाग्यको सफलता रहने छ।

कु० नं० ९७६

१० ८
११ ९ ७
१२ ६
१ ३ ५
२ ४

# धनु लग्नमा–सुनौला तारीखहरू

सन् १९९८ को वर्षमा- ता० १/१/९८ बाट समय उत्तम रहला। ता० १३/५/९८ बाट समय दुर्बल रहने छ। अलि-अलि दुःख सुख चल्दै रहला। ता० २०/८/९८ बाट भाग्यका दिन फर्कनन्। ता० ३०/१०/९८ देखि समय बढी खर्च हुने खालको रहला, भाग्य प्राय कमजोर नै रहने छ। ता० २०/१२/९८ बाट ता० ३०/१२/९८ सम्ममा समय उत्तम रहने छ।

कु० नं० १७७

सन् १९९९ को वर्षमा- ता० १/१/९९ देखि समय उन्नतिदायक रहने छ। यस वर्षमा विद्या, बुद्धि र सन्तान पक्षमा समय श्रेष्ठ रहने छ, मान-सम्मान र प्रभाव बढ्ने छ। ता० ३/६/९९ बाट उन्नतिमा बाधा रहने छ। ता० ७/७/९९ देकि गृहस्थीमा सफलता रहने छ। ता० २४/७/९९ बाट समयमा न्यूनता आउने छ, धन-हानि हुन सक्तछ। ता० १६/८/९९ देखि भाग्यको उत्तम समय रहने छ। ता० २५/१०/९९ बाट फेरि समय कमजोर रहला। ता० १६/१२/९९ बाट ३१/१२/९९ सम्म भाग्यको सफलता बनिरहने छ।

कु० नं० १७८

# धनु लग्नमा–सुनौलो तारीखहरू

सन् २००० को वर्षमा- ता० ६/१/२००० देखि समय लाभदायक रहने छ। ता० २३/४/२००० बाट केही कष्ट-बाधा रहला। ता० १९/६/२००० देखि स्थितिमा आंशिक सुधार होला। ता० १४/७/२००० देखि भाग्यमा न्यूनता आउन सक्छ। ता० २/८/२००० बाट फेरि भाग्यको सफलता चल्न थाल्नेछ। ता० २७/१०/२००० बाट अधिकांश रूपमा भाग्यको सफलता बनिरहला। ता० १६/११/२००० बाट समय बढी खर्चको र दुर्बल रहला। ता० ३/१२/२००० देखि ३१/१२/२००० सम्ममा भाग्यको सफलता रहिरहला।

कु० नं० ९७९

सन् २००१ को वर्षमा - ता० ५/१/२००१ बाट भाग्य र मान प्रभावको वृद्धि रहला। ता० ७/६/२००१ बाट उन्नतिको मार्गमा बाधा आउन सक्दछ। ता० २५/६/२००१ देखि ता० ८/७/२००१ सम्म पूर्ण सफलता रहने छ। ता० ९/७/२००१ बाट भाग्य कमजोर रहने छ। ता० १७/८/२००१ देखि समय बढी खर्चको रहला र धनको न्यूनता रहने छ। ता० ७/१२/२००१ देखि ३१/१२/२००१ सम्ममा भाग्य र मान-सम्मान बढ्ने छ।

कु० नं० ९८०

# धनु लग्नमा–सुनौलो तारीखहरू

सन् २००२ को वर्षमा - ता०६/१/२००२ बाट भाग्यको उत्तम समय चल्नेछ। ता० ८/४/२००२ बाट भाग्यमा केही न्यूनता आउला। ता० ४/५/२००२ बाट केही सप्रन्दै जानेछ। ता० २/६/२००२ बाट केही कष्ट-बाधा बढ्दै जानेछ। ता० १७/६/२००२ बाट व्यापार र गृहस्थीमा सफलता प्राप्त हुन सक्तछ। ता० २६/९/२००२ देखि भाग्योन्नतिको समय चल्नेछ। ता० १८/१०/२००२ देखि भाग्यमा केही न्यूनता आउला। ता० १/१२/२००२ देखि २९/१२/२००२ सम्ममा खर्च बढी रहे पनि सामान्य लाभ बनिरहला।

कु० नं० ९८१

१० ८ / ११ ९ ७ / १२ ६ / १ ३ ५ / २ ४

सन् २००३ को वर्षमा - ता० ६/१/२००३ बाट भाग्योन्नति रहने छ, मान प्रभाव बढ्ने छ। ता० ४/२/२००३ देखि पुरुषार्थ कर्मको सफलता रहने छ। ता० २/४/२००३ देखि घरेलू काममा सुख सफलता बढ्ने छ र सन्तान वृद्धिमा सफलता रहला। ता० २४/५/२००३ देखि भाग्योन्नतिमा अपठेरो आउला। ता० १५/६/२००३ देखि व्यापार र गृहस्थीमा सफलता रहला। ता० १०/७/२००३ देखि भाग्यमा न्यूनता आउला। ता० १७/८/२००३ देखि भाग्य सप्रन्दै जाला। ता० १७/१०/२००३ देखि भाग्यमा फेरि दुर्बलता आउला। ता० १५/१२/२००३ देखि ता० १०/१२/२००३ सम्म भाग्यमा अग्लो-होचो चलिरहला।

कु० नं० ९८२

३० ८ / ११ ९ ७ / १२ ६ / १ ३ ५ / २ ४

# धनु लग्न हुनेकोहरूको–सुनौला तारीखहरू

सन् २००४ को वर्षमा - ता० १/१/२००४ बाट भाग्य र मान प्रभाव बढ्ने छ। उन्नति रहला। ता० १४/४/२००४ देखि केही कष्ट रहने छ। ता० १५/६/२००४ देखि भाग्यको सफलता रहला। ता० ५/८/२००४ देखि भाग्यमा न्यूनता रहने छ। ता० १८/९/२००४ देखि आमदानी बढ्ने छ। व्यापारमा उन्नति रहला। ता० १६/११/२००४ देखि भाग्य केही विपरीत रहला। ता० २३/१२/२००४ देखि ता० ३१/१२/२००४ सम्ममा भाग्योन्नति रहला, मान-सम्मान बढ्ला।

कु० नं० ९८३

१० ८
११ ९ ७
१२ ६
१ ३ ५
२ ४

सन् २००५ को वर्षमा - ता० १/१/२००५ देखि भाग्यको उन्नति रहला र मान-सम्मान बढ्ला, धनको सफलता प्राप्त होला। ता० ४/३/२००५ देखि ता० ६/४/२००५ सम्ममा घरेलू सुखका विशेष साधन बढ्ने छ। त्यसपछि समय केही कष्टदायक रहने छ। ता० १५/६/२००५ देखि व्यापार र गृहस्थीमा सफलता र उन्नति रहने छ। ता०१७/७/२००५ भाग्यमा न्यूनता रहने छ। ता० १७/८/२००५ देखि १७/१०/२००५ सम्म भाग्य र मान प्रभाव बढ्ने छ। त्यसपछि समय कमजोर रहने छ। ता० १७/१२/२००५ देखि भाग्य सप्रन्दै जानेछ।

कु० नं० ९८४

१० ८
११ ९ ७
१२ ६
१ ३ ५
२ ४

# धनु लग्न हुनेहरूको लागि-सुनौलो तारीखहरू

सन् २००६ को वर्षमा - ता० १/१/२००६ देखि भाग्यको सफलता रहने छ। ता० ६/६/२००६ देखि लाभमा कमी आउन सक्दछ । ता० ७/७/२००६ देखि व्यापारमा सफलता रहला। ता० २४/७/२००६ देखि उन्नतिमा बाधा आउला।ता० १७/८/२००६ देखि भाग्यको सफलता प्रारम्भ होला। ता० १८/१०/२००६ बाट भाग्यमा केही कमजोरी आउला। केही लाभ पनि हुनेछ। ता० १/१२/२००६ देखि ३१/१२/२००६ सम्म भाग्यको सफलता रहने छ।

कु० नं० ९८५

१० ८ ११ ९ ७ १२ ६ १ ३ ५ २ ४

सन् २००७ को वर्षमा - ता० १/१/२००७ बाट भाग्योन्नति रहने छ। ता० २३/४/२००७ बाट उन्नतिको बाटोमा बाधा आइपर्ला। ता० ३०/६/२००७ देखि व्यापारमा सफलताको शक्ति बढ्ने छ। ता० १६/७/२००७ देखि भाग्य सप्रन्दै जानेछ। ता० १७/८/२००७ देखि भाग्यमा सुधार आउन सम्भव छ।ता० १४/१०/२००७ सम्म उन्नति रहने छ, त्यसपछि भाग्यमा न्यूनता आउला। ता० १/१२/२००७ देखि भाग्य सप्रन्दै जाला। ता० ३१/१२/२००७ सम्म उन्नति चल्दै रहने छ।

कु० नं० ९८६

१० ८ ११ ९ ७ १२ ६ १ ३ ५ २ ४

# कार्य सिद्धिको विषय

धन लग्न हुने व्यक्तिहरूलाई - विद्या र सन्तानको सम्बन्धमा मंगल सदैव केही चिन्ता र कष्टको सूचक छ र लाभ, आमदानीको सम्बन्धमा, शुक्र कुनै न कुनै चिन्ताको कारण बनाउँदै रहन्छ र चन्द्रमा सदैव मनमा फिक्री उमारि रहन्छ। अतः सधैं खानु भन्दा अगाडि, मंगलवारको दिन गहुँको पुरीमा गुलियो हाली लड्डू बनाएर राती गाईलाई खान-दिनु अनि शुक्रवार दूध हालेको भाँग घोटेर शिवलिंगमा चढाउनु, सोमवार एक पाउ दहीमा चीनी हालेर ब्राह्मणलाई दिनु। राहु-केतु स्वभावैले कष्टदाता ग्रह हुन्, यसै निम्ति चरा-चुरूँगी र माछा-कछुवालाई पीठोको गोली खान दिनु।

कु० नं० ९८७

१० ८ ११ ९ ७ १२ ६ १ ३ ५ २ ४

धनु लग्न हुने व्यक्तिलाई-धन र भाग्योन्नतिको सम्बन्धमा शनि,बुध,शुक्र र सूर्य- यी चारै ग्रह श्रेष्ठ छन्। अतः पञ्चांगमा जुन-जुन वर्षमा, महीनामा शनि, मकर, तुला, सिंह अथवा केन्द्रमा जब-जब आउने मकर, तुला, सिंह अथवा केन्द्रमा जब-जब आउने छन् या शुक्र-मकर, तुला, मिथुन, मेष धन र मीनमा जब-जब आउँछन् वा बुध, मकर, तुला, कन्या, सिंह, मिथुन, धन र मेषमा जब-जब आउने छन, अथवा सूर्य- कन्या, सिंह, धन, मकर, मिथुन र मीन जब-जब आउने छन्, तब-तब ती समयमा धनोन्नति र भाग्योन्नति गर्दै रहन्छन्।

कु० नं० ९८८

१० ८ ११ ९ ७ १२ ६ १ ३ ५ २ ४

# धनु लग्न हुनेहरूको–प्रतिकूल समय ज्ञान

कु० नं० १८१

१०, ८, ११, ९, ७, १२, ६, १, ३, ५, २, ४

(सदैव कालको लागि)

तल लेखिएका ग्रहहरू जब-जब यी राशिहरूमा पञ्चांगमा आउने छन्, तब-तब ती वर्षमा, महीनामा र दिनमा अशान्तप्रद वातावरण रहने छ।

---

**सू०**- तुला, वृश्चिक, वृष र कर्क।

**चं०**- वृश्चिक।

**मं०**- वृश्चिक, वृष र कर्क।

**बु०**- वृश्चिक, वृष र कर्क।

**गु०**- वृश्चिक, मकर, वृष र कर्क।

**शु०**- वृश्चिक, वृष, कर्क र कन्या।

**श०**- वृश्चिक, मेष, वृष र कर्क।

**रा०**- धन, मकर, मीन, मेष, कर्क र कन्या।

**के०**- मकर, मीन, मेष, मिथुन, कर्क र कन्या।

---

***नोट***- सालाना फलादेशको क्रम जान्नका लागि श० शु० रा० के० यी चार ग्रहबाट गन्नुपर्दछ। मासिक फलादेश जान्नका लागि सू० बु० शु० मं० यी चार ग्रहबाट गणना गर्नुपर्दछ। अनि दैनिक फलादेश जान्नका लागि चन्द्रमाबाट गणना गरे उत्तम हुनेछ। सूर्यबाट अस्त हुने ग्रहले न्यून फल दिन्छ।

# धनु लग्नहुनेहरूको–अनुकूल समय ज्ञान

कु० नं० ९९०

१० ८
११ ९ ७
१२ ६
१ ३ ५
२ ४

(सदैव कालको लागि)

तल लेखिएका ग्रहहरू जब-जब यी राशिहरूमा पञ्चांगमा आउने छन्। तब-तब ती वर्षमा, महीनामा र दिनमा लाभप्रद र सुखदायक समय रहने छ।

**सू०-** सिंह, कन्या, धन, मकर, कुम्भ, मीन, मेष र मिथुन।
**चं०-** कर्क, सिंह, कन्या, तुला, धन, मकर, कुम्भ, मीन, मेष र मिथुन।
**मं०-** सिंह, कन्या, तुला, धन, मकर, कुम्भ, मीन, मेष र मिथुन।
**बु०-** सिंह, कन्या, तुला, धन, कुम्भ, मीन, मेष र मिथुन।
**शु०-** तुला, धन, मकर, कुम्भ, मीन, मिथुन, सिंह र कन्या।
**श०-** तुला, धन, मकर, कुम्भ, मीन, मेष, मिथुन र सिंह।
**रा०-** तुला, वृश्चिक, कुम्भ, वृष, मिथुन र सिंह।
**के०-** तुला, वृश्चिक, धन, कुम्भ, वृष र सिंह।

***नोट-*** सालाना फलादेश जान्नका लागि श० शु० रा० के० यी चार ग्रहबाट गणना गर्नुपर्दछ। मासिक फलादेश जान्नका लागि सू० बु० शु० मं० यी चार ग्रहबाट गणना गर्नुपर्दछ। अनि दैनिक फलादेश जान्नका लागि चन्द्रमाबाट हेर्नु पर्दछ। अन्यान्य जानकारीका लागि 'भाग्योदय दर्पण' हेर्नुहवस्।

# धनु लग्नान्तर – सूर्यफलम्

जुन व्यक्तिको धन राशिको सूर्य लग्नबाट प्रथम स्थानमा छ भने त्यो मानिस भाग्यशाली र राम्रो शरीरवाला तथा भाग्यमानी झैं देखिनेभएको र दया धर्मलाई मान्ने तथा ईश्वरमा श्रद्धा विश्वासवाला र भाग्य-शक्तिको ठूला-ठूला चमत्कार राख्ने भएको र प्रभाव पाउने खालको तथा दैवयोगद्वारा सधैं सहायक वस्तुहरू प्राप्त गर्नेवाला र शरीरद्वारा हरेक स्थानमा सम्मान पाउनेवाला तथा यश पाउने खालको र आफ्नू भाग्यमानीको गौरव आफूभित्र राख्न जान्ने भएको, व्यापारमा सफलता पाउने भएको, अनि गृहस्थीमा स्त्रीमा पनि गौरव र सफलता पाउनेवाला, निकै प्रभावशाली, तेजस्वी व्यक्ति होला।

कु० नं० १११

१० ८
११ ९सू. ७
१२ ६
१ ३ ५
२ ४

जुन व्यक्तिको मकर राशिको सूर्य लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस आफ्नू भाग्यको ताग़तद्वारा मनमा अपठेरो मान्दै धनको प्राप्ति फेला पार्ने भएको र भाग्यको सम्बन्धमा केही बन्धन झैं अनुभव गर्नेवाला र कुटुम्बसित केही रूखो व्यवहार गर्नेवाला र धन संग्रहको पक्षमा केही कष्ट-बाधा पाउने भएको र पुरातत्त्व स्थानबाट फाइदा प्राप्त गर्ने खालको आयुमा वृद्धि पाउने भएको एवं धर्मको पक्षमा केही हानि पाउने भएको र भाग्यको उन्नतिको सम्बन्धमा केही रूकावट पाउने खालको तथा निकै ढीलो भाग्योदय प्राप्त गर्नेवाला, धर्मभन्दा धनलाई बढी महत्त्व दिने भएको तथा जीवनमा समयलाई सभ्य सुचारू तथा राम्रो काइदाले व्यतीत गर्न जान्ने भएको भाग्यमानी व्यक्ति होला।

कु० नं० ११२

१० ८
११ ९ ७
१२ ६
१ ३ ५
२ ४

जुन व्यक्तिको कुम्भ राशिको सूर्य लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस आफ्नू पुरुषार्थले केही कष्ट साध्य उपायहरू द्वारा भाग्यवृद्धि

कु० नं० ९९३

१० ८ ११ सू. ९ ७ १२ ६ १ ३ ५ २ ४

पाउने भएको र परिश्रमद्वारा सफलता पाउनेवाला र धर्मको पालन श्रद्धापूर्वक गर्ने खालको तथा ठूलो साहस र उत्साहले काम गर्ने भएको तर परिश्रम भित्र केही असजिलो वा अपठेरोको योग पाउने खालको र दाजु-भाइ दिदी-बहिनीको उत्तम सहयोग पाएर पनि उनीहरू तर्फबाट केही न्यूनता अनुभव गर्ने भएको र भाग्योदय कालमा केही ढीलो योग परेको तथा प्रभावशाली एवं पराक्रमी र ईश्वरमा श्रद्धा विश्वास राख्ने खालको तथा भाग्य र पुरुषार्थ दुवैलाई परस्पर समान महत्व दिनेवाला, भाग्यमानी यशस्वी तथा तत्त्व-खोजी र उदार व्यक्ति होला।

जुन व्यक्तिको मीन राशिको सूर्य लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस ठूलो भाग्यशाली र भवन-भूमि प्रसस्त भएको तथा माताको वा मातृ

कु० नं० ९९४

१० ८ ११ ९ ७ १२सू. ६ १ ३ ५ २ ४

स्थानको सुख निकै पाउने भएको पिताबाट पनि फाइदा पाउने र सुख प्राप्तिका साधन स्वयं नै प्राप्त गर्ने खालको तथा धर्म-कर्मको पालन सुखपूर्वक गर्ने भएको र सुखपूर्वक नै यश-मान प्राप्त गर्ने खालको होला। भाग्यको तागतले नै सम्मान पाउने भएको, राजस्थानबाट लाभ पाउने भएको, व्यापारमा नाफा कमाउने खालको र ईश्वरको पूरा भरोसा मान्नेवाला, तत्त्वग्राही, प्रभावशाली र सुन्दर कर्मेष्ठी होला।

जुन व्यक्तिको मेष राशिको सूर्य लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस निकै बुद्धिमान र धेरै विद्यावान् तथा अनेक धर्मको ज्ञान भएको अनि बुद्धियोगद्वारा भाग्यको उन्नति पाउनेवाला र सन्तान पक्षमा भाग्यमानी गनिने खालको, निकै प्रभावपूर्ण वाणीमा बोल्नेवाला आफूभित्र 'म भाग्यमानी हुँ' भन्ने ठूलो अहं भावना राख्ने वाला र आमदानीको स्थानमा न्यूनता ठान्नेवाला र लाभ प्राप्तिको लागि उदारत्तालाई त्यागिदिने खालको तथा निकै दूरदर्शी तथा ठूलो ज्ञानी एवं बाठो र भाग्यको उन्नतिका लागि ठूला-ठूला उच्च स्तरका उपायहरू खोजेर निकाल्न जान्ने भएको भाग्यमानी व्यक्ति होला।

कु० नं० ९९५

१० ८ ११ ९ ७ १२ ६ १सू. ३ ५ २ ४

जुन व्यक्तिको वृशराशिको सूर्य लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस भाग्यको सम्बन्धमा ठूला-ठूला कष्ट-बाधा र झ्याउला आदिको योग परेको, धर्म-कर्मको उचित रूपमा पालन गर्न नसक्ने, एवं शत्रु आदि विपक्षीहरूको स्थानमा प्रभाव पाउने तथा विपत्तीहरूलाई थिचिदिने एवं रोगमा काबू पाउने खालको अनि झगडा-विवाद आइलाग्ने मामलामा परिश्रमद्वारा भाग्योदय पाउनेवाला, बढी धन व्यय गर्ने तथा अन्य स्थानको सम्पर्कबाट केही लाभ पाउनेवाला, ईश्वरमा विश्वास थोरैं भएको र मावली पक्षबाट केही प्रभाव पाउने, तामसी धर्मवाला र प्रतिभाशाली व्यक्ति होला।

कु० नं० ९९६

१० ८ ११ ९ ७ १२ ६ १ ३ ५ २सू. ४

जुन व्यक्तिको मिथुन राशिको सूर्य लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस भाग्यको तागतद्वारा व्यापारमा वृद्धि पाउने भएको तथा उत्तम प्रभावशाली स्त्री प्राप्त गर्नेवाला, विवाह भएपछि भाग्यवृद्धि पाउने खालको अर्थात् भाग्यवती स्त्री पाउने भएको एवं व्यापारको उन्नति गर्ने, गृहस्थ धर्मको निकै राम्रो प्रभावशाली काइदाले पालन गर्ने तथा व्यापारको क्रममा प्रभाव र इज्जत वा यश कमाउने खालको, भाग्यमानीको लौकिक आनन्द भोग्ने भएको, व्यापारको परिधिमा ईमानदारीको राम्ररी पालन गर्ने खालको र व्यापारमा अकस्मात धन प्राप्तिको बाटो फेलापार्ने व्यक्ति होला।

कु० नं० ९९७

१० ८
११ ९ ७
१२ ६
१ ३सू. ५
२ ४

जुन व्यक्तिको कर्क राशिको सूर्य लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस भाग्यको सम्बन्धमा हानि पाउनेवाला, भाग्योदयको लागि चिन्तित रहने भएको, भाग्यको विकास निकै ढीलो र महान् कष्ट-बाधा एवं विदेश आदिमा प्राप्त गर्ने खालको, पुरातत्त्व शक्तिको निकै लाभ पाउने भएको, अनि जीवनमा निर्वाहक शक्तिको बल पाउने अनि जीवनको समय निकै उत्तम र प्रभावशाली काइदाले व्यतीत गर्न जान्नेवाला, धर्मस्थानमा बढी न्यूनता वा कमजोरी पाउनेवाला, भाग्योदयको लागि ठूला-ठूला र गहीरा युक्तिहरू प्रयोग गर्न जान्ने, लामू आयुष्य भएको, यश र प्रशंसाको कमी (न्यूनता) पाउनेवाला, मृतक धर्म मान्ने, स्वार्थी खालको व्यक्ति होला।

कु० नं० ९९८

१० ८
११ ९ ७
१२ ६
१ ३ ५
२ ४सू.

जुन व्यक्तिको सिंह राशिको सूर्य लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस निकै प्रखर वा तीखो भाग्यभएको तथा तेजस्वी र तीव्र धर्मको पालन

कु० नं० ९९९

१०, ८, ११, ९, ७, १२, ६, १, ३, ५सू., २, ४

गर्ने भएको, धर्मात्मा, न्यायकारी ठूलो यश कमाउने खालको तथा स्वयंमेव नै भाग्य वृद्धिको कारण भेट्टाउने भएको र ईश्वरमा श्रद्धा, भक्ति र महान विश्वास राख्ने भएको तथा पुरुषार्थलाई अलि थोरै महत्व दिने खालको दाजु-भाइ दिदी-बहिनीमा कम श्रद्धा राख्ने भएको तथा चाक्लो मस्तकवाला, पारलौकिक विषयको धेरै ध्यान राख्नेवाला तथा शीलरहित परोपकार गर्ने भएको, 'न भई छाड्दैन' भन्ने कुरालाई ठूलो मान्ने भएको समदर्शी स्वभावको व्यक्ति होला।

जुन व्यक्तिको कन्या राशिको सूर्य लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस भाग्यमानी र भाग्यको शक्तिबाट नै धेरै मान-सम्मान पाउने भएको

कु० नं० १०००

१०, ८, ११, ९, ७, १२, ६सू., १, ३, ५, २, ४

तथा व्यवहारमा सफलता वा यश प्राप्त गर्नेवाला, एवं पिताको स्थानबाट विशेष लाभ र उन्नति पाउने भएको र पिताको उन्नति गर्नेवाला, राज-समाजबाट फाइदाको कारणले र उन्नतिले प्रसन्न रहने भएको, धर्म-कर्मको बढी पालन गर्ने खालको, मातृ स्थानबाट सफलता पाउने भएको तथा निकै प्रभावशाली र प्रतापी, प्रतिष्ठित एवं उत्तम कर्म गर्नेवाला, न्याय मनपराउने र हुकुम चलाउने खालको होला।

जुन व्यक्तिको तुला राशिको सूर्य लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस धर्मको सम्बन्धबाट र भाग्यको सम्बन्धबाट साधारण लाभ पाउने

कु० नं० १००१

१० ८ ११ ९ ७सू. १२ ६ १ ३ ५ २ ४

भएको र लाभको स्थानमा केही न्यूनता अनुभव गर्ने खालको अनि धर्मको यर्थाथ पालन गर्नमा केही दुर्बलता पाउनेवाला किन्तु धर्मको सम्बन्धमा तथा बुद्धिमा बर्ता ज्ञान राख्ने भएको र विद्यामा प्रकाश पाउनेवाला अनि सन्तान शक्ति भेट्टाउने खालको एवं धार्मिक विषयमा राम्रो बोल्न जान्ने, भाग्यको केही दुर्बलताले गर्दा भाग्यको पूर्ण उदय हुनमा विलम्ब पाउनेवाला, केही परेशानी तथा बन्धन झैं पाउने व्यक्ति होला।

जुन व्यक्तिको वृश्चिक राशिको सूर्य लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस भाग्य सम्बन्धमा हानि पाउने भएको र अन्यान्य स्थानबाट

कु० नं० १००२

१० ८सू. ११ ९ ७ १२ ६ १ ३ ५ २ ४

भाग्योदय पाउनेवाला र भाग्यको उदयका लागि निकै कष्ट पाउनेवाला र ढिलो हुनाले चक्कर काट्नेवाला,बढी धन व्यय गर्नेवाला तथा धर्मको हानि पाउनेवाला र यशको न्यूनता भेट्टाउने भएको र तीर्थ आदिमा श्रद्धा भएको तथा शत्रु स्थानमा प्रभाव पाउनेवाला अनि ईश्वरमा श्रद्धा थोरै राख्ने खालको र आफ्नू भाग्यमा पश्चात्ताप मान्ने भएको र खर्चको संचालन मार्गमा भाग्यको उत्तम सहयोग पाउने खालको र अन्य स्थानमा सहजै पाउनेवाला, लौकिक बुद्धिको व्यक्ति होला।

# धनु लग्नान्तर - चन्द्रफलम्

जुन व्यक्तिको धनु राशिको चन्द्रमा लग्नबाट प्रथम स्थानमा छ भने त्यो मानिस लामू आयुष्य पाउनेवाला तथा पुरातत्त्वको लाभ प्राप्त गर्नेवाला अनि पुरातत्त्वको सम्बन्धमा निकै उच्च ज्ञान प्राप्त गर्ने भएको र गहीरो युक्तिद्वारा र गूढ रहस्यहरूको आधारमा कसैलाई आदर्श तुल्याई प्रयोग गर्ने एवं शरीरमा शीतल र गुप्त चिन्ताहरू पाउने भएको र शरीरमा दुर्बलता वा यथार्थ सौन्दर्यतामा केही न्यूनता पाउने खालको, व्यापारमा केही चिन्ता वा घाटा पाउने भएको तथा स्त्री स्थानमा केही झ्याउला बोक्ने भएको र मनभित्र शक्ति र चिन्ताको समावेश भएको अनि जीवनको दिनचर्या भित्र एक प्रकारको तेज-ओज फैलापार्नेवाला, मस्त जीवनको व्यक्ति होला।

कु० नं० १००३

१० ८ ११ ९च. ७ १२ ६ १ ३ ५ २ ४

जुन व्यक्तिको मकर राशिको चन्द्रमा लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस आफ्नू जीवनकालमै दैनिक दिनचर्यालाई यौटा उत्तम परिवारको काइदाले व्यतीत गर्न जान्ने खालको तथा धन संग्रहको स्थानमा केही हानि अथवा न्यूनताको योग पाउने भएको तथा पुरातत्त्व शक्तिहरूको फाइदा भेट्टाउने खालको एवं जीवनको प्रभाव राम्रो र सुन्दर भएर पनि केही अपठेरो खालको कमीको योग पनि पाउने भएको र कौटुम्बिक हानिको योग पनि पाउनेवाला तथा गूढ र गम्भीर समस्याहरूको सम्बन्धमा मनोयोगको महान् शक्तिबाट फाइदा पाउनेवाला तथा लामू आयुष्य पाउने भएको र धन-प्राप्तिका लागि बर्ता आडम्बर र कष्ट-बाधा युक्त रहेर काम गर्ने व्यक्ति होला।

कु० नं० १००४

१०च. ८ ११ ९ ७ १२ ६ १ ३ ५ २ ४

जुन व्यक्तिको कुम्भ राशिको चन्द्रमा लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस दाजु-भाइ दिदी-बहिनीको स्थानमा हानि पाउने भएको र शीतल एवं कठिन पुरुषार्थ गर्ने खालको तथा लामू आयु भएको अनि पुरातत्त्वको सम्बन्धमा मनोबलबाट उन्नति भेट्टाउने र गूढ गुप्त धर्मको स्थानमा केही हानिको योग भेट्टाउने खालको र भाग्यको स्थानमा परिवर्तनका लागि केही कष्ट र भूतकालका लागि उत्तमताको योग पाउनेवाला र बल-पुरुषार्थमा न्यूनता पाउने भएको र कठिन परिश्रम एवं दौड़-धूप गर्ने भएको र आफ्नू पुरुषार्थ स्थानमा केही विघ्न-बाधा झैं अनुभव गर्ने अनि अनेक युक्ति जान्ने तथा अलमस्त जीवनयापन गर्ने खालको होला।

कु० नं० १००५

जुन व्यक्तिको मीन राशिको चन्द्रमा लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस मातृस्थानमा केही हानि पाउनेवाला, पुरातत्त्व शक्तिको धेरै सुख प्राप्त गर्ने भएको, दीर्घ आयुको राम्रो योग पाउनेवाला, घरेलू सुखसित सम्बन्धित वातावरणमा केही हानि पांउने भएको र जीवनको दिनचर्यालाई सुखपूर्वक व्यतीत गर्नेवाला, व्यापारादि र मानोन्नतिको सम्बन्धमा केही साध्य योग पाउनेवाला, पितास्थानबाट पनि केही कष्ट-बाधाको योग पाउनेवाला गूढ युक्तिहरूद्वारा मनको सहयोग र सुखका साधन उत्पन्न गर्नेभएको, उदर विकारबाट मुक्ति पाउनेवाला, अलमस्त र वेवास्ताले समय बिताउने खालको व्यक्ति होला।

कु० नं० १००६

जुन व्यक्तिको मेष राशिको चन्द्रमा लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस सन्तान पक्षबाट कष्ट हानि सहनेवाला, विद्याग्रहण गर्ने वेलामा पनि अपठेरो र विद्याग्रहण गर्नमा पनि कमीको योग पाउने भएको, लामू आयुष्य पाउनेवाला, पुरातत्त्व र पैतृक ज्ञान एवं शक्ति प्राप्त गर्नेवाला र गहीरा विचारहरूलाई मनोयोगको बलले प्रयोग गर्न जान्ने र बढी लाभ पाउनको लागि गहीरा युक्तिहरूलाई गहीरा विचारहरूमा परिणत गर्न जान्ने भएको र लाभमा वृद्धिको लागि मन र बुद्धिमा चिन्तन गरिरहने वाला र आफ्नू जीवनको राम्रो समयलाई निकै बुद्धिपूर्वक र भलादमी झैं व्यतीत गर्ने खालको व्यक्ति होला।

कु० नं० १००७

१० ८
११ ९ ७
१२ ६
१च. ३ ५
२ ४

जुन व्यक्तिको वृषराशिको चन्द्रमा लग्नबाट छैटौं स्थानमा छ भने त्यो मानिस आफ्नू जीवनमा प्रभाव राख्ने भएको र खर्चको सम्बन्धमा दुर्बलता वा न्यूनता पाउनेवाला र अन्य स्थानको सम्पर्कमा कमजोरी अनुभव गर्नेखालको र शत्रुस्थानमा आफ्नू प्रभाव राख्नेवाला र मावली पक्षमा केही धन र प्रभाव पाउनेवाला र जीवनको समयमा केही घेराउ अनुभव गर्ने भएको र गूढ एवं गहीरो लुकाई-छपाईको युक्तिहरूलाई बढी ज्ञानसहित प्रयोग गर्न जान्ने भएको र मन-भित्र केही पुरातत्त्वबाट सम्बन्धित विवाद ल्याउलाको चाल चल्ने शक्ति राख्नेखालको आयुको सम्बन्धमा दृढता पाउनेवाला, निर्भयताले आफ्नू काम सिद्ध पार्न जान्ने, केही शील रहित होला।

कु० नं० १००८

१० ८
११ ९ ७
१२ ६
१ ३ ५
२च. ४

जुन व्यक्तिको मिथुन राशिको चन्द्रमा लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस आफ्नू गृहस्थ जीवनको सम्बन्धमा अनेक कष्ट-बाधा सहने भएको र लामू आयुष्य प्राप्त गर्ने खालको र स्त्री पक्षमा केही गुप्त कष्ट, वेदना सहनेवाला र केही व्यापारको सम्बन्धमा बाधा आपत्ति सहन सक्ने भएको अनि पुरातत्त्व शक्तिको पूरा लाभ पाउने खालको र गहीरो एवं गूढ ज्ञानको मनोबलद्वारा व्यापारमा लाभ उत्पन्न गर्ने भएको, शरीरमा केही कष्ट-बाधा पाउनेवाला र जीवनमा अलमस्त बेफिक्री पाउनेवाला र व्यापारको क्रममा पर वा अन्य स्थानको सम्बन्ध भेट्टाउने भएको र व्यापार एवं स्त्रीको पक्षमा केही मानसिक कडाईले काम सिद्ध पार्ने खालको होला।

कु० नं० १००९

१० ८
११ ९ ७
१२ ६
१ ३च. ५
२ ४

जुन व्यक्तिको कर्क राशिको चन्द्रमा लग्नबाट आठौं छ भने त्यो मानिस जीवनकालमै निकै प्रभाव र शानले युक्त समय व्यतीत गर्ने भएको, लामू आयुष्य पाउनेवाला, केही प्रसिद्धि पनि भेट्टाउने भएको र मनोयोग शक्तिको निकै गहीरो ज्ञान राख्ने खालको, जीवनमा पूर्ण चमत्कार उत्पन्न गर्ने खालको युक्तिहरू आफ्नू सिद्धिका लागि प्रयोग गर्ने र पुरातत्त्व सम्बन्धित विषयको पूर्ण ज्ञान राख्ने खालको र यो बाहेक पैत्रिक लाभ पनि उत्तम पाउनेवाला र धनको कोषमा केही हानिको योग पाउने भएको संचित विभूतिहरू र अदृश्य गुप्त वस्तुहरूको लाभ पाउनेवाला र निस्फिक्री जीवन बिताउने व्यक्ति होला।

कु० नं० १०१०

१० ८
११ ९ ७
१२ ६
१ ३ ५
२ ४च.

जुन व्यक्तिको सिंह राशिको चन्द्रमा लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस पुरातत्त्वबाट संचित विभूतिको आनन्द प्राप्त गर्नेवाला र लाभो आयुष्य प्राप्त गर्ने खालको र धर्मको स्थानमा हानि पाउनेवाला र मनोयोगको प्रपंच बलले अकस्मात भाग्य वृद्धिको योजना बनाउन जान्ने खालको र ईश्वरमा कम विश्वास, श्रद्धा गर्ने भएको र यशमा निर्वाहका लागि राम्रो साधन पाउनेवाला, भाग्यको स्थानमा दुर्बलता र कष्टक पाउने खालको अनि भाग्यको उन्नति र विकासको लागि दुःख र विलम्ब पाउनेवाला र दाजु-भाइ दिदी-बहिनीबाट केही कष्टको योग पाउनेवाला ढाँचा देखाउने शील संतोष भएको होला।

कु० नं० १०११

१० ८ ११ ९ ७ १२ ६ १ ३ ५च. २ ४

जुन व्यक्तिको कन्या राशिको चन्द्रमा लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस पिता स्थानमा कण्टक पाउनेवाला र लामू आयुष्य पाउने भएको एवं जीवनको समय शानदार काइदाले व्यतीत गर्न जान्ने भएको र पद-उन्नति, मानोन्नतिको सम्बन्धमा कण्टक र झञ्झटको योग पाउनेवाला र निकै उच्च प्रपंचलाई मनोयोगद्वारा उन्नतिको बाटोमा लगाउन जान्ने खालको र पुरातत्त्व शक्तिको विकास गरेर लाभ पाउने भएको र व्यापार स्थान र राजस्थानमा धेरै प्रकारका झञ्झट र विघ्न-बाधा सहने, केही मातृस्थानमा सुखको कमी पाउने, गहीरो चाल चल्न जान्ने व्यक्ति होला।

कु० नं० १०१२

१० ८ ११ ९ ७ १२ ६च. १ ३ ५ २ ४

जुन व्यक्तिको तुला राशिको चन्द्रमा लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस पुरातत्त्वको शक्तिको लाभ पाउनेवाला र लामू आयुको लाभ पाउनेवाला र जीवनमा प्रभावको आनन्द लाभको योग पाउनेवाला, आमदानी र लाभको स्थानमा केही झ्याउलो र परिश्रम सहन सक्ने खालको र मनोयोगको गहीरो युक्तिहरूबाट लाभ पाउनेवाला र सन्तान पक्षमा केही क्लेश र कष्ट सहनेवाला र विद्याको स्थानमा केही बाधा पाउनेवाला, पुरातत्त्वको सम्बन्धमा मन तथा बुद्धिमा निकै जोश पाउनेवाला एवं निस्फिक्री र बेवास्ता देखाउने भएको तथा लाभको परिधिमाशील सन्तोष मन नपराउने खालको होला।

कु० नं० १०१३

१० ८
११ ९ ७च.
१२ ६
१ ३ ५
२ ४

जुन व्यक्तिको वृश्चिक राशिको चन्द्रमा लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस आफ्नू जीवनमा क्लेश र महान अशान्तिहरूको योग पाउने खालको तथा आयुमा न्यूनता पाउने भएको एवं खर्चको क्रममा निकै बाधा-कष्ट सहने भएको र अन्य स्थानमा अशान्तिको योग अनुभव गर्ने खालको र जीवनको आनन्दमा न्यूनता वा कमी पाउनेवाला तथा पुरातत्त्वको हानि पाउने खालको मन भित्र दुःख र दुर्बलता अनुभव गर्ने भएको र शत्रु स्थानमा अथवा विपक्षीहरूमा प्रभाव पाउनेवाला तथा आफ्नू जीवनलाई थिचेर पनि प्रभाव वृद्धिको बर्ता ध्यान राखेर निकै गुप्त युक्तिहरूबाट कार्यसिद्धि गर्ने भएको, भ्रमण युक्त, चिन्तित र सानोचित्त भएको व्यक्ति होला।

कु० नं० १०१४

१० ८च.
११ ९ ७
१२ ६
१ ३ ५
२ ४

# धनु लग्नान्तर - भौमफलम्

जुन व्यक्तिको धनु राशिको मंगल लग्नबाट प्रथम स्थानमा छ भने त्यो मानिस देश-विदेश भ्रमण गर्ने र शरीरमा दुर्बलता पाउने भएको, वृद्धिलाई विशेष वर्काइ-फर्काइ गरेर उच्च काम विचारेर गर्ने खालको, कुरा-कानी गर्ने वेलामा अन्यको साथ निकै दह्रो चक्करका कुरा गरेर आफ्नू काम सिद्ध पार्नेवाला, अन्यान्यलाई अलपत्र परिदिन जान्नेवाला र मातृ स्थानमा हानि पाउनेवाला र स्त्री स्थानमा पनि हानि-क्लेशको योग पाउने भएको र जीवनको दिनचर्यामा निकै अशान्ति अनुभव गर्ने खालको र पुरातत्त्व शक्तिबाट हानि पाउनेवाला र बढी धन व्यय गर्ने खालको विद्या र सन्तान पक्षमा केही न्यूनताको योग पाउनेवाला र अन्यान्य स्थानहरूको निकै आदर्श सम्पर्क वृद्धिद्वारा सुख प्राप्त गर्ने भएको व्यक्ति होला।

कु० नं० १०१५

१० ८ ११ ९मं. ७ १२ ६ १ ३ ५ २ ४

जुन व्यक्तिको मकर राशिको मंगल लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस धन स्थानमा बर्ता हानि लाभको विचित्र योग पाउने भएको र अर्को अन्य स्थानको सम्पर्कबाट वा बुद्धियोग द्वारा अकस्मात प्रसस्त धन प्राप्त गर्नेवाला र उपस्थित धनमा बढी खर्च गर्ने भएको र धेरै उच्च गहीरो बुद्धि भएको बुद्धि एवं वाणीको जबरदस्त उल्टो-सोझो कार्य द्वारा धन कमाउने गहीरा फाइदाहरू आफूसित सुरक्षित राख्ने भएको र सन्तान शक्ति पाउनेवाला किन्तु सन्तान सम्बन्धमा केही बन्धन केही हानिको योग पाउनेभएको र जीवनको दिनचर्यामा केही न्यूनता र क्लेशको योग पाउनेवाला र भाग्य एवं धर्मस्थानमा पनि उन्नतिका लागि अनेक उल्टो-सोझो गरिरहने खालको व्यक्ति होला।

कु० नं० १०१६

१०मं. ८ ११ ९ ७ १२ ६ १ ३ ५ २ ४

जुन व्यक्तिको कुम्भ राशिको मंगल लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस दाजु-भाइ दिदी-बहिनीको स्थानमा हानिको योग पाउनेवाला र

कु० नं० १०१७

१० ८ ११ मं. ९ ७ १२ ६ १ ३ ५ २ ४

व्ययशक्तिको स्थानमा केही बल-पुरुषार्थमा न्यूनता पाउने खालको एवं बुद्धि योगद्वारा निकै पुरूषार्थ गर्नेवाला तथा शत्रु स्थानमा प्रभाव जमाई राख्ने भएको तथा सन्तान सम्बन्धमा केही कमीको योग भेट्टाउने भएको र पिता स्थानमा हानिको योग पाउनेवाला एवं पिता र व्यापार स्थानमा उल्टो-सोझोको योग पाउनेवाला र अन्य स्थानसित सम्बन्धित कामहरूमा बुद्धि र कुराकानीको चातुर्य देखाएर प्रभाव पाउनेवाला र मान-सम्मानमा न्यूनता पाउनेवाला, मुढेबलको बुद्धिले काम सपार्न जान्ने र धर्म सम्बन्धमा पनि अनेक थरिका उल्टो-सोझो काम गर्ने र ठूलो साहस भएको व्यक्ति होला।

जुन व्यक्तिको मीन राशिको मंगल लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस आफ्नू आमाको हानि पाउने भएको र मातृस्थानमा हानि वा

कु० नं० १०१८

१० ८ ११ ९ ७ १२मं. ६ १ ३ ५ २ ४

क्लेश पाउनेवाला तथा भवन-भूमिको पनि हानि पाउने भएको र स्त्री स्थानमा हानि पाउने खालको र व्यापार एवं लाभको सम्बन्धमा बढी उल्टो-सोझो गरेर बुद्धिले काम सपार्न जान्ने भएको तर व्यापारमा केही हानि पाउनेवाला तथा अन्य स्थानको सम्पर्कबाट बुद्धिद्वारा लाभ पाउनेवाला, सन्तान सम्बन्धमा केही न्यूनता र केही सुख प्राप्त गर्ने भएको र विद्यामा पनि केही कमी पाउनेवाला तथा खर्च शक्तिलाई सुखपूर्वक चलाउने र अन्य स्थानमा पनि निवास गर्ने भएको व्यक्ति होला।

जुन व्यक्तिको मेष राशिको मंगल लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस ठूलो बुद्धिको र कुराकानीको निकै घुमाउरो काट-छाँटले काम सिद्ध पार्न जान्ने र बढी धन व्यय गर्ने र सन्तान कष्ट सहनेवाला र आफ्ना वाक्चातुर्यले अन्य व्यक्तिलाई चकित पार्न सक्नेवाला, खर्चको शक्ति प्राप्त गर्नेवाला, अत्यन्त बाठो होला। आफू पनि बुद्धिमान र विचारहरूमा चक्कर खानेवाला किन्तु साथै साथ कुराकानीको दृढताले काम गर्नेवाला र आफ्नू जीवनमा सदैव चिन्तित रहने खालको र बढी धन लाभ गर्न सक्ने भएको, पुरातत्त्व शक्तिको हानि पाउनेवाला र विद्यामा कमी पाउनेवाला अनि आफ्नू बुद्धिद्वारा अन्य स्थानको बलियो सम्पर्क कायम राख्नेवाला र आफ्नू दुर्बलतालाई ढाकेर टर्रिएर कुरा गर्ने व्यक्ति होला।

कु० नं० १०१९

१० ९ ८ ११ ७ १२ ६ १मं. ३ ५ २ ४

जुन व्यक्तिको वृषराशिको मंगल लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस सन्तान कष्ट सहने र विद्यामा न्यूनता पाउनेवाला, अनि खर्चको स्थानमा विघ्न-बाधा पाइरहने भए पनि खर्च बर्ता गर्ने भएको र खर्चको मामलामा केही परतन्त्रता र अन्य स्थानको सम्पर्क पाउनेवाला र शत्रुलाई दमन (थिच्न) जान्ने भएको अनि शरीरमा केही दुर्बलता र गर्मी अनुभव गर्ने, धर्म स्थानमा केही हानि पुर्‍याउने खालको र भाग्यमा केही न्यूनता पाउनेवाला, मावली पक्षमा केही हानि पुर्‍याउने भएको र बुद्धिद्वारा कुराकानीमा जबरदस्त उल्टो-सोझो बोल्ने र लुकाई-छिपाई गरेर काम पूर्ण पार्नेवाला, गिदीमा गर्मी बढी भएको, सहन शीलताको उल्लंघन गर्ने होला।

कु० नं० १०२०

१० ९ ८ ११ ७ १२ ६ १ ३ ५ २मं. ४

जुन व्यक्तिको मिथुन राशिको मंगल लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस स्त्री स्थानमा हानिको योग पाउनेवाला र अन्यस्थानको सम्पर्कबाट बुद्धिको प्रयोगद्वारा व्यापार गर्ने भएको किन्तु व्यापारको स्थानमा केही हानिको योग पाउनेवाला एवं धन वृद्धिका लागि विशेष रूपमा आफ्नू बुद्धिद्वारा तथा अन्यान्य स्थानबाट बलियो सम्पर्क प्राप्त गर्ने खालको र आफ्नू दुर्बलतालाई ढाक्न जान्ने, सन्तान सम्बन्धमा केही हानि र कष्ट-बाधा पाउनेवाला र पिताको स्थानमा केही हानिको योग पाउने भएको तथा राज-समाजमा पनि कहिले काहीं कुनै कमीको योग पाउने भएको तर अन्य स्थानको सम्पर्कमा उत्तम मान-सम्मान पाउने खालको र विद्यामा पनि केही न्यूनता र देहमा पनि केही दुर्बलता पाउने खालको व्यक्ति होला।

कु० नं० १०२१

१० ८ ११ ९ ७ १२ ६ १ ३मं. ५ २ ४

जुन व्यक्तिको कर्क राशिको मंगल लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस सन्तान पक्षमा विशेष कष्ट अनुभव गर्ने खालको तथा विद्यामा कमी पाउने भएको र खर्चको विषयमा पनि निकै कष्ट भोग्ने खालको, जीवनमा अशान्ति अनुभव गर्नेवाला, धन-जनको वृद्धिका लागि निकै कठिन भन्दा पनि कठिन चेष्टाहरू गर्नेवाला, पुरातत्त्वको हानि पाउने र आयुमा केही कमीको योग पाउने भएको र बुद्धि खेलाएर गूढ युक्तिहरूको सम्बन्धमा निकै गहीरो र डरलाग्दो चाल खेल्ने भएको र गहीरो लुकाई-छिपाईबाट काम सिद्ध पार्ने, दाजु-भाइ दिदी-बहिनीको स्थानमा केही हानिको योग पाउने तथा लाभस्थानमा निकै प्रयत्न गर्नेवाला अनि केही शरीर विकारले ग्रसित होला।

कु० नं० १०२२

१० ८ ११ ९ ७ १२ ६ १ ३ ५ २ ४मं.

जुन व्यक्तिको सिंह राशिको मंगल लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस बुद्धि र भाग्यको तागतले बढी धन व्यय गर्ने भएको, भाग्य स्थानमा केही हानिको योग पाउने खालको, अन्य स्थानको गहीरो र उत्तम सम्पर्क पाउनेवाला अनि सन्तान पक्षमा केही हानि र केही लाभ पाउनेवाला तथा मातृस्थानमा आंशिक हानि पाउनेभएको तथा आमाबाट र भूमि-भवन पक्षबाट केही कमी पाउनेवाला एवं विद्यामा केही न्यूनता पाउने भएको र सुख-शान्तिमा केही हानि पाउने भएको, दाजु-भाइ दिदी-बहिनीको स्थानमा केही न्यूनता भेट्टाउने र भाग्यको उन्नतिका लागि निकै ठूलो उल्टो-सोझो बुद्धिद्वारा काम सपार्न जान्ने खालको तथा भाग्योदय पाउने होला।

कु० नं० १०२३

१० ८
११ ९ ७
१२ ६
१ ३ ५मं.
२ ४

जुन व्यक्तिको कन्या राशिको मंगल लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस पढे-लेखेको बुद्धिमान तथा राजभाषाको ज्ञाता र तीक्ष्ण बुद्धि द्वारा काम लिन जान्ने तथा सन्तान शक्तिलाई केही दुर्बलताले पाउने खालको, पितालाई हानि पुऱ्याउनेवाला, बर्ता ठस्सा देखाएर खर्च गर्नेवाला तथा आफ्नू उन्नति र पदउन्नतिमा विघ्न-बाधा तथा अनेकानेक हानिहरू पाउनेवाला, मान-सम्मान पाउने, उल्टो-सोझो र दगुरा-दगुरको लाभ केही प्राप्त गर्ने भएको, शरीरमा केही दुर्बलता पाउने खालको र हानि-नोक्सानी सहनेवाला, पुरुषार्थमा दुर्बलता पाउने तथा बुद्धि र विद्यामा धेरै दुर्बलता पाउने भएको तथा अन्यान्य स्थानको सम्बन्ध सदैव बुद्धिद्वारा बलियो कायम राख्न सक्ने तथा बुद्धिद्वारा निकै ठूलो उल्टो-सोझो किसिमको कुरा गर्नेवाला, भ्रमित बुद्धि भएको तथा धेरै परको कुरा चिन्तन गर्नेवाला, शत्रु स्थानमा केही प्रभाव पार्न जान्ने तथा उल्टो काइदाले विवाद गर्ने भएको र मावली पक्षबाट केही हानि पाउने खालको व्यक्ति होला।

कु० नं० १०२४

१० ८
११ ९ ७
१२ ६मं.
१ ३ ५
२ ४

जुन व्यक्तिको तुला राशिको मंगल लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस अन्यान्य स्थानको योगद्वारा लाभ पाउनेवाला, धन वृद्धिको

कु० नं० १०२५

१० ८ ११ ९ ७मं. १२ ६ १ ३ ५ २ ४

निकै ठूलो प्रयत्न गर्ने भएको, बुद्धिद्वारा प्रसस्त लाभ कमाउने खालको, विद्यामा केही न्यूनताका साथै उत्तम फल पाउनेवाला, सन्तान सम्बन्धमा पनि केही कमीका साथै राम्रो फल पाउने भएको, शत्रुलाई हानि पुऱ्याउनेवाला, मावली पक्षमा हानि पाउने खालको र लाभ-खर्चको ठूलो योग पाएर काइदासाथ चल्न जान्ने, आम्दानीका लागि कटु र तीक्ष्ण बुद्धिले काम पूरा गर्नेवाला, धन र कुटुम्बको ठूलो आडम्बर झैं पाउनेवाला र बुद्धि खेलाएर बढी लाभ कमाउने चेष्टा सधैं गरिरहने होला।

जुन व्यक्तिको वृश्चिक राशिको मंगल लग्नबाट बाहौं स्थानमा छ भने त्यो मानिस बढी धन खर्च गर्ने खालको तथा सन्तान पक्षबाट अनेक थरिका

कु० नं० १०२६

१० ८मं. ११ ९ ७ १२ ६ १ ३ ५ २ ४

साना-ठूला हानिहरू सहने भएको तथा स्त्रीस्थानमा पनि निकै हानि पाउनेवाला र दाजु-भाइ दिदी-बहिनीको पक्षमा पनि हानिकै योग पाउने भएको एवं व्यापारमा निकै हानि स्थानबाट बढी इज्जत भेट्टाउने भएको, पिताको सम्बन्धमा केही न्यूनता पाउनेवाला र बढी भोग-विलास प्राप्त गर्ने खालको, सौम्य स्वभाव भित्र अहंभाव राख्नेवाला, धेरै बाठो, परिश्रमी र इज्जतदार, परमविवेकी निकै चातुर्ययुक्त व्यक्ति होला।

# धनु लग्नान्तर - बुधफलम्

जुन व्यक्तिको धनुराशिको बुध लग्नबाट प्रथम स्थानमा छ भने त्यो मानिस शोभा र स्वच्छताको निकै उच्च रोजगार व्यापार गर्ने भएको तथा निकै उच्च कार्यकुशल, कर्मेष्ठी तथा लौकिक व्यवहारको राम्रो ज्ञान राख्ने भएको र लौकिक कार्यहरूमा उत्तम सफलता पाउनेवाला, गृहस्थी सम्बन्धमा निकै मान-सम्मान पाउने भएको, धेरै प्रभावशाली पत्नीको स्वामी र पिता अन्यान्य स्थानको सम्पर्कमा सहयोग पाउने भएको, आफ्नू काममा कटुता र कठोरताको योगबाट कर्म गरेर यश अपयश पाउने खालको व्यक्ति होला।

कु० नं० १०२७

१० ८ ११ ९बु. ७ १२ ६ १ ३ ५ २ ४

जुन व्यक्तिको मकर राशिको बुध लग्नबाट द्वितीय स्थानमा छ भने त्यो-मानिस अनेक थरिका व्यापारद्वारा धेरै धन कमाउने भएको, धनको तागतले वा अन्य स्थानको सम्पर्कद्वारा अथवा बुद्धिद्वारा निकै ठूलो धनराशि पाउनेवाला, धेरै कुटुम्ब भएको, लौकिक प्रणालीमा धेरै इज्जत कमाउने तथा व्यापारमा उन्नति गर्ने भएको र पुरातत्त्व शक्तिबाट लाभ पाउनेवाला, स्त्री र गृहस्थीमा केही बन्धन पाउने भएको र बढी भोग-विलासको इच्छा राख्नेवाला तथा धन संग्रह गर्नेवाला, राज स्थानबाट लाभ पाउने तथा ठूला-ठूला काम गर्ने भएको, निकै विवेकी र परम चतुर होला।

कु० नं० १०२८

१०बु. ८ ११ ९ ७ १२ ६ १ ३ ५ २ ४

जुन व्यक्तिको कुम्भ राशिको बुध लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस आफ्नू कर्मबलद्वारा महान पुरुषार्थ गर्ने भएको र पुरुषार्थले नै महान् उन्नति पाउनेवाला र पिता, दाजु-भाइ दिदी-बहिनीको शक्तिको सहयोग पाउने खालको तथा स्त्री र गृहस्थीमा पनि वृद्धि शक्तिको योग पाउनेवाला, वाहन (कार आदि) को व्यापारमा निकै सफलता पाउनेवाला निकै उत्साही, कार्य कुशल, कर्मष्ठि तथा धर्म-कर्मको पालन गर्ने भएको र ठूलो राजसी ठाँटले जीवन-यापन गर्नेवाला, उच्च मान-सम्मान पाउने भएको, राम्रो कद-काठीको र महान् परिश्रम एवं बढी चातुर्यद्वारा काम गर्नेवाला तथा सौम्य शक्तिवाला एवं स्वाभिमानी, भाग्यमानी र परम विवेकी व्यक्ति होला।

कु० नं० १०२९

१० ८ ११ बु. ९ ७ १२ ६ १ ३ ५ २ ४

जुन व्यक्तिको मीन राशिको बुध लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस यशस्थानमा हानि र न्यूनता पाउने भएको तथा घर गृहस्तीमा घोर अशान्तिको योग पाउनेवाला तथा पिता स्थानबाट केही क्लेश र वृद्धि पाउने भएको, भवन-भूमि, धनको न्यूनता पाउनेवाला र घरभित्र जति कष्ट सहे पनि घरको बाहिर प्रदर्शनका लागि बढी शान र इज्जत राख्ने भएको, अनि कुनै व्यापारमा केही दैनिक कमी अर्थात नित्य-प्रतिको व्यापारमा केही दुर्बलता र केही अलि ठूलो फाइदाको व्यापारमा वृद्धि पाउने भएको बढी अल्छी अनि केही उत्साही तथा बिस्तार-बिस्तार कार्यमा वृद्धितिर लम्कने खालको र स्त्री स्थानतिरबाट पनि केही न्यूनता पाउने भएको गुप्त विवेकी व्यक्ति होला।

कु० नं० १०३०

१० ८ ११ ९ ७ १२बु. ६ १ ३ ५ २ ४

जुन व्यक्तिको मेष राशिको बुध लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस स्त्रीस्थानबाट, पिता स्थानबाट महान् कार्य गर्ने भएको तथा महान् चातुर्यका योगहरूबाट निकै ठूलो व्यापार गर्ने खालको, परम विवेकी तथा बढी लाभ पाउनेवाला, सन्तान शक्ति प्राप्त गर्ने भएको राज-समाजको राम्रो व्यावहारिक ज्ञान राख्ने भएको, स्त्री स्थानबाट लाभ र योग्यता पाउने खालको र पितास्थानबाट पनि उन्नतिका साधन फेला पार्ने र बुद्धिमा निकै बर्ता प्रभाव पाउने भएको तथा धन-प्राप्ति र भोग वैभवको बढी इच्छा राख्नेवाला तथा लौकिक कार्यहरूमा विशेष दखल राख्ने भएको तथा मान र इज्जतको पनि बढी ध्यान राख्ने खालको व्यक्ति होला।

कु० नं० १०३१

१० ८ ११ ९ ७ १२ ६ १बु. ३ ५ २ ४

जुन व्यक्तिको वृष राशिको बुध लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस स्त्रीस्थान र पितास्थानबाट वैमनस्य-विरोधको योग पाउने भएको दैनिक रोजगार-व्यापारमा ठूला-ठूला कष्ट-बाधा सहने र केही परतन्त्रता युक्त कर्म गरेर व्यापार चलाउने तथा बढी धन व्यय गर्ने खालको मावली पक्षबाट केही सहयोग अथवा मदत पाउनेवाला, र शत्रु स्थानमा केही नम्रताद्वारा काम लिन जान्ने भएको तर नम्रतामा पनि केही कठोरता राख्ने खालको एवं मान-सम्मानमा केही न्यूनता पाउने भएको र भोग विलासमा पनि केही कमी पाउने खालको र केही अल्छी स्वभाव भएको गृहस्थ जीवनमा केही शान्ति पाउनेवाला तथा गुप्त चातुर्य जान्ने भएको व्यक्ति होला।

कु० नं० १०३२

१० ८ ११ ९ ७ १२ ६ १ ३ ५ २बु. ४

जुन व्यक्तिको मिथुन राशिको बुध लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस निकै बढी उत्तम व्यापार गर्ने भएको र गृहस्थीको उत्तम आनन्द पाउनेवाला, उत्तम प्रभावशाली र बाठी स्त्री भएको र आफ्नू उत्तम कार्यले निकै मान-सम्मान पाउनेवाला र राम्रो वेशभूषा धारण गर्ने तथा निकै विवेक युक्त चातुर्यहरूले सारा लौकिक कार्य गर्ने भएको अनि व्यापारको मध्यस्थलमा पार्न जान्ने तथा कारबारको गुणगान र ख्याति पाउनेवाला अनि खूब भोग-विलास पाउने खालको र पिताबाट व्यापारिक सहायता पाउनेवाला र उत्तम ससुराली भेट्टाउने तथा व्यापार प्रणालीमा सौन्दर्यको र स्वच्छताको पूरा-पूरा ध्यान राख्ने खालको व्यक्ति होला।

कु० नं० १०३३

१० ८
११ ९ ७
१२ ६
१ ३बु. ५
२ ४

जुन व्यक्तिको कर्क राशिको बुध लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस आफ्नू व्यापारमा विघ्न-बाधा र हानिहरू सहन गर्नेवाला र पिता स्थानमा कमी पाउने र स्त्रीस्थानमा न्यूनता पाउने वा हानि पाउनेवाला र पुरातत्त्वको फाइदा पाउने खालको तथा बढी गूढ र गुप्त चातुर्यहरूको योगबाट व्यापार गर्ने भएको र व्यापारमा विघ्न-बाधाको सामना गर्ने खालको र विदेश आदिमा कामको योग पाउनेवाला, धन-वृद्धिको पूर्ण चेष्टा गर्ने भएको, भोग-विलासमा बढी कमी पाउनेवाला र गृहस्थी सम्बन्धमा क्लेश र मान-हानि सहन गर्ने भएको केही अल्छी र अकर्म्मण्य एवं व्यावहारिक प्रणालीमा उल्टो चाल चल्नेवाला र आफ्नू जीवनमा केही ज्ञान बुझ्नेवाला होला।

कु० नं० १०३४

१० ८
११ ९ ७
१२ ६
१ ३ ५
२ ४बु.

जुन व्यक्तिको सिंह राशिको बुध लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस भाग्य-शक्तिको बलले ठूलो व्यापार गर्ने भएको र व्यवहारमा धर्म-कर्मको बढी ध्यान राख्ने भएको अनि गृहस्थ धर्मको धेरै उत्तम तथा सुचारु-रूपले न्यायोक्त पालन गर्नेवाला तथा उत्तम कर्तव्य परायण स्त्री पाउनेवाला पिता र दाजु भाइ-दिदी-बहिनीको सुन्दर सहयोग पाउनेवाला र धर्म-कर्ममा श्रद्धा-भक्ति राख्ने खालको, निकै ठूलो पुरुषार्थ गर्न सक्ने भएको र रोजगार र कारबारमा निकै योग्यता तथा स्वच्छतासहित परम विवेकपूर्ण काइदाले काम चलाउन जान्ने र धर्मको स्थानमा स्वार्थको पनि बढी ध्यान राख्ने खालको संयमी भाग्यमानी र राज-समाजबाट लाभयुक्त रहने खालको साहसी व्यक्ति होला।

कु० नं० १०३५

१० ८ ११ ९ ७ १२ ६ १ ३ ५बु. २ ४

जुन व्यक्तिको कन्या राशिको बुध लग्नबाट दसौं स्थानमा छ भने त्यो मनुष्य जबरदस्त व्यापार गर्ने भएको र पिता स्थानबाट ठूलो शक्ति प्राप्त गर्नेवाला, राज-समाजमा प्रसस्त इज्जत पाउने खालको, स्त्री अत्यन्त राम्री र प्रभावशाली पाउनेवाला र निकै उच्च ससुराली पाउने भएको, लौकिक व्यवहारमा निकै उच्च स्थानमा पुग्ने खालको अनि अनेक राम्रा-राम्रा चातुर्यहरूको लाभबाट उन्नति पाउनेवाला, माताको पक्षमा न्यूनता पाउने सुख-शान्तिमा बाधा पाउने र भवन-भूमिस्थानमा केही कमी पाउने र निकै प्रभावशाली कार्य गर्ने तथा बढी भोग-विलास पाउनेवाला उन्नतिको अग्लो शिखरमा पुग्नको निम्ति सदैव प्रयत्नशील रहने भएको अत्यन्त बाठो व्यक्ति होला।

कु० नं० १०३६

१० ८ ११ ९ ७ १२ ६बु. १ ३ ५ २ ४

जुन व्यक्तिको तुला राशिको बुध लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस अनेक व्यापारबाट धेरै लाभ पाउने भएको, ठूला-ठूला चातुर्यहरू द्वारा र विवेक बुद्धिको कर्मले धेरै प्रकारका लाभ पाउनेवाला, राम्री स्त्रीको पनि लाभ भेट्टाउने र पिता स्थानबाट विशेष धन पाउने खालको होला। सन्तान शक्ति प्राप्त गर्ने भएको तथा भोग-विलासको पनि लाभ पाउनेवाला तथा ससुरालीबाट मान इज्जत पाउने भएको र राज-समाजसित सम्बन्धित काममा लाभ पाउनेवाला र राम्रा पदार्थहरू अकस्मात भेट्टाउनेवाला, अनेक थरिका लाभ प्राप्त गर्नका लागि महान् प्रयत्न गर्ने तथा माननीय र बाठो व्यक्ति होला।

कु० नं० १०३७

१० ८
११ ९ ७बु.
१२ ६
१ ३ ५
२ ४

जुन व्यक्तिको वृश्चिक राशिको बुध लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस व्यापारमा अनेक हानि पाउनेवाला र पिता स्थानमा पनि हानि नै पाउने भएको, अन्यान्य स्थानबाट व्यापारको सम्बन्ध पाउने किसिमको होला। बढी धन खर्च गर्नेवाला र स्त्री स्थानमा हानि भेट्टाउने तथा कुनै पनि व्यापारको निम्ति विघ्न-बाधा परेर बढी दगुरा-दगुर गर्नु पर्ने भएको तथा राज-समाजका कार्यहरूमा न्यूनता पाउनेवाला एवं उन्नतिका कामहरूमा बाधा पाउनेवाला र सम्मानको स्थानमा कमी अनुभव गर्ने र कष्ट सहनेवाला र केही अल्छी स्वभावको, केही झ्याउलाहरू सहने भएको र गृहस्थीमा न्यूनता पाउने र अन्यान्य स्थानको चातुर्यले आफ्ना सबै काम पूरा पार्न जान्ने व्यक्ति होला।

कु० नं० १०३८

१० ८बु.
११ ९ ७
१२ ६
१ ३ ५
२ ४

# धनु लग्नान्तर - गुरुफलम्

जुन व्यक्तिको धनु राशिको गुरू लग्नको पहिलो स्थानमा छ भने त्यो मानिस अनेक सुख भोग्नेवाला र धेरै मान-सम्मान पाउने भएको र मातृस्थानको स्वयं सिद्ध अधिकार पाउनेवाला तथा मातृभूमि र माताको हृदयमा अगाध श्रद्धा राख्ने तथा भूमिका सर्वत्र जहाँ पुगे पनि मान-सम्मान स्वतः प्राप्त गर्ने खालको र केही स्थूल एवं सलक्क शरीर आदरणीय तथा शान्ति-प्रिय र मीठो भोजन मिष्ठान्नयुक्त खाने इच्छा गर्ने भएको, स्त्रीको सुख र मान-सम्मान प्राप्त गर्नेवाला र सुखपूर्वक व्यापार गरेर इज्जत कमाउने भएको र आफ्नू स्थानमा नै अडिएर रहने भएको विद्या तथा धर्म-कर्मको सुख पाउने खालको तथा सन्तान सुख पाउनेवाला, भाग्यमानी, गुणी व्यक्ति होला।

कु० नं० १०३९

१० ८ ११ ९गु. ७ १२ ६ १ ३ ५ २ ४

जुन व्यक्तिको मकर राशिको गुरू लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस धन प्राप्तिको सम्बन्धमा प्राणको डर पनि नमान्ने भएको प्राणभन्दा पनि धनलाई महत्त्व दिनेवाला र धनको पक्षमा अनेक दुःख अनुभव गर्ने खालको अर्थात धन संग्रहमा दुर्बलता पाउने भएको र धन प्राप्तिका लागि सुखलाई गुमाउने खालको, धनको न्यूनताले सुखमा पनि कमी पाउने भएको, मातृ स्थानबाट हानि पाउनेवाला, अनि भूमि-भवनको कमी अनुभव गर्ने खालको, शरीरमा दुर्बलता पाउनेवाला, कुटुम्बको क्लेश सहने भएको, जीवनको दिनचर्यामा उत्थान पाउने खालको, पुरातत्त्वबाट लाभ पाउनेवाला, शत्रुमाथि आफ्नू प्रभाव दर्शाउने भएको, पिता स्थानको सुख प्राप्त गर्ने खालको, व्यापारबाट नै सुखी हुने र मानयुक्त होला।

कु० नं० १०४०

१०गु. ८ ११ ९ ७ १२ ६ १ ३ ५ २ ४

जुन व्यक्तिको कुम्भ राशिको गुरु लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस पुरुषार्थले सुख प्राप्त गर्नेवाला र धन लाभ पाउने भएको अनि भाग्य-शक्तिको पनि सुख प्राप्त गर्नेवाला, व्यापारमा पनि सुख प्राप्त गर्नेवाला र स्त्री स्थानबाट अनेक सुखको योग पाउनेवाला तथा माता र दाजु-भाइ दिदी-बहिनीको पक्षमा सुखको न्यूनताको योग पाउने तथा धर्मको सम्बन्धमा हृदयदेखि नै धर्म-कर्मको पालन गरेर सुखानुभव गर्ने भएको तथा ईश्वरमा निष्ठा राख्नाले सुख अनुभव गर्ने भएको र लाभ प्राप्तिको लागि बढी परिश्रम गर्नेवाला एवं परिश्रममा बर्ता थकाई अनुभव गर्नेवाला र गृहस्थ सुखको लौकिक आनन्द पाउने खालको उद्यमी होला।

कु० नं० १०४१

१० ८
११ गु. ९ ७
१२ ६
१ ३ ५
२ ४

जुन व्यक्तिको मीन राशिको गुरु लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस सुखपूर्वक रहनेवाला, मातृस्थानको र माताको सुख प्राप्त गर्नेवाला, वृद्धावस्था भएको तथा भूमि-भवनको स्वामी र सुखका अनेक साधन पाउनेवाला तथा शरीर र हृदयमा परम सुख-शान्तिको अनुभव गर्ने खालको एवं जीवनमा र दिनचर्यामा महान आनन्द र गौरव प्राप्त गर्नेवाला, लामो आयुष्य पाउने भएको र पुरातत्त्वको केही विशेष सुख प्राप्त गर्ने खालको र मान-सम्मान पाउने भएको तथा पिताबाट सुख पाउने खालको र बढी धन व्यय गरेर प्रसन्न हुने भएको अनि बाहिरी स्थानको सम्पर्कमा धेरै सुख अनुभव गर्ने तथा आफ्नू स्थानमा अडिएर रहने तथा साहसी कर्मेष्ठी र गुणी व्यक्ति होला।

कु० नं० १०४२

१० ८
११ ९ ७
१२गु. ६
१ ३ ५
२ ४

जुन व्यक्तिको मेष राशिको गुरू लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस बुद्धिमान, बढी स्वाभिमानी र निकै गौरवशाली अनि सुन्दर शरीर

कु० नं० १०४३

| | | |
|---|---|---|
| १० | ९ | ८ |
| ११ | | ७ |
| १२ | | ६ |
| १गु. | ३ | ५ |
| २ | | ४ |

पाएको तथा प्रतापी सन्तानवाला र सन्तानबाट र बुद्धि विद्याको सम्पर्कबाट उन्नति र ख्याति पाउनेवाला र बुद्धि वा सन्तानको कारणले नै भित्री मनमा सुख शान्ति प्राप्त गर्ने भएको अनि मातृ स्थानको शक्तिद्वारा उत्थान पाउने किसिमको तथा अन्तर ज्ञानी र ठूलो नीतिज्ञ एवं शान्तिप्रिय र धर्म-कर्मलाई मान्नेवाला तथा खूब लाभ पाउनेवाला, शास्त्रीय ज्ञान भएको, परम विवेकी र अनेक थरिका मान-सम्मान प्राप्त गर्ने खालको निकै भाग्यमानी व्यक्ति होला।

जुन व्यक्तिको वृषराशिको गुरू लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस सुख-शान्तिमा बाधा पाउनेवाला शरीरमा दुर्बलता पाउने भएको,

कु० नं० १०४४

| | | |
|---|---|---|
| १० | ९ | ८ |
| ११ | | ७ |
| १२ | | ६ |
| १ | ३ | ५ |
| २गु. | | ४ |

केही परतन्त्रताको योग पाउने भएको, केही बन्धन झैं अनुभव गर्ने खालको अथवा केही योगयुक्त रहने भएको, माताको र मातृस्थानको पनि केही सहयोग पाउने भएको, कौटुम्बिक क्लेश सहने, मान प्रतिष्ठा प्राप्त गर्ने भएको, पिता स्थानको उन्नति मनपराउने अनि परिश्रम वा कर्म-बलको योगगबाट प्रभाव पाउने, धनको न्यूनता अनुभव गर्नेवाला, बढी खर्च गर्नेवाला, दानी दुश्मन होशियार तथा गुप्त नीतिज्ञ र अन्यान्य स्थानको सम्पर्क पाउने तथा सावधान खालको व्यक्ति होला।

जुन व्यक्तिको मिथुन राशिको गुरू लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस सुखपूर्वक निकै व्यापार गर्ने भएको, शरीरमा र व्यापारमा निकै गौरव पाउनेवाला, गृहस्थ जीवनमा एक प्रकारको महानता र सुखको योग पाउनेवाला र सुन्दर प्रभावशाली र गुणी पत्नीवाला, अनि माताको बर्ता कर्मयोग प्राप्त गर्नेवाला, धनको लाभ पाउनेवाला र खूब धन कमाउने भएको र बढी परिश्रम गर्ने खालको तथा शरीरमा बढी सौन्दर्य पाउनेवाला दाजु-भाइ दिदी-बहिनीको पक्षमा वैमनस्यता पाउनेवाला र घरको केही भूमि-भवनको योग पाउने खालको एवं लौकिक कर्म गर्नमा केही कला र अहंभाव पाउनेवाला र स्वाभिमानी होला।

कु० नं० १०४५

१० ८ ११ ९ ७ १२ ६ १ ३गु. ५ २ ४

जुन व्यक्तिको कर्कराशिको गुरू लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस गूढ युक्तिहरूको बलबाट आफूभित्र यौटा अपूर्व शक्तिको मजा लिने भएको र आफ्नू जीवन र दिनचर्यामा यौटा ठूलो तेज र उल्लास प्राप्त गर्नेवाला र धन-जनको तर्फबाट दुर्बलता अनुभव गर्ने खालको तथा खूब खर्च गर्ने खालको तथा निकै उच्चवर्गको रहन-सहनद्वारा निवास गर्नेवाला तर आफ्नू स्थितिमा र आफ्नू आत्मस्थितिमा आफू भित्र दुर्बलता मात्रै भएको र भवन-भूमि प्रसस्त भएको, मातृ-स्थानको शक्ति पाउनेवाला र सुखका साधन पाउनेवाला व्यक्ति होला।

कु० नं० १०४६

१० ८ ११ ९ ७ १२ ६ १ ३ ५ २ ४गु.

जुन व्यक्ति सिंह राशिको गुरू लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस निकै भाग्यमानी, गुणवान र शास्त्रीय ज्ञान राख्ने भएको, धर्माचरण गर्ने भएको, ईश्वरमा श्रद्धा राख्नेवाला, विद्या र बुद्धिमा अधिकार राख्ने उत्तम शरीर भएको धेरै भवन-भूमिको स्वामी र मातृस्थानको सहायता पाउने खालको र ठूलो ख्याति पाउनेवाला र मान-सम्मान पाउने भएको र सुखका अनेक साधन भाग्यको सहायताले नै प्राप्त गर्नेवाला, दाजु-भाइ दिदी-बहिनी र आफ्नू पुरुषार्थको सम्बन्धमा केही वैमनस्यता राख्ने भएको, भाग्यलाई नै ठूलो मान्ने खालको व्यक्ति होला।

कु० नं० १०४७

१० ८
११ ९ ७
१२ ६
१ ३ ५गु.
२ ४

जुन व्यक्तिको कन्याराशिको गुरू लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस सुखपूर्वक ठूलो व्यापार गर्ने भएको र आफ्नू कारबारमा उन्नति गर्ने खालको र भूमि-भवनको ठूलो प्रभाव प्राप्त गर्ने भएको, धेरै ठूला साधनहरू पाउने भएको तथा माता-पिताको इज्जत सम्मान गर्ने र राज-समाजमा सम्मान पाउनेवाला र धन-जनको तर्फबाट न्यूनता वा झञ्झट अनुभव गर्ने भएको र निकै ठूलो प्रभाव भेट्टाउने खालको तथा प्रभावशाली कर्म गर्नेवाला एवं आफूभित्र निकै ठूलो अहंकार राख्ने भएको तथा पिता स्थानमा केही सुविस्ता पाउनेवाला र सदैव धेरै ठूलो राजसी उन्नतितिर प्रयत्नशील रहने खालको तथा नम्र अभिमानी र कर्मेष्ठी व्यक्ति होला।

कु० नं० १०४८

१० ८
११ ९ ७
१२ ६गु.
१ ३ ५
२ ४

जुन व्यक्तिको तुला राशिको गुरू लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस सुखका साधनहरूद्वारा लाभ पाउनेवाला तर त्यो लाभ पाउनमा

कु० नं० १०४९

१० ८ ११ ९ ७गु. १२ ६ १ ३ ५ २ ४

केही वैमनस्यता र अपठेराहरू पाउने भएको र आफ्नै शरीरले लाभ पाउने साधनहरू उत्पन्न गर्ने खालको र मातृ स्थानको शक्तिबाट केही मद्दत पाउने, दाजु-भाइ दिदी-बहिनीको स्थानमा केही विवाद वा वैमनस्यता पाउने खालको र विद्या एवं बुद्धिमा उत्तम अधिकार प्राप्त भएको र सन्तान सुख प्रसस्त प्राप्त गर्नेवाला, आफ्नू गृहस्थीको स्त्री सम्बान्धित उत्तम सुख प्राप्त गर्ने भएको, व्यापारमा उन्नति पाउने र रोजगारबाट सुख प्राप्त गर्ने, परिश्रमबाट जोगिन खोज्ने भएको उद्योगी व्यक्ति होला।

जुन व्यक्तिको वृश्चिक राशिको गुरू लग्नबाट बार्हौं स्थानमा छ भने त्यो मानिस शरीरमा केही सौन्दर्यको न्यूनता र केही दुर्बलताको योग

कु० नं० १०५०

१० ८गु. ११ ९ ७ १२ ६ १ ३ ५ २ ४

पाउनेवाला बढी धन व्यय गर्ने खालको, खर्चको तागतबाट अनेक सुख प्राप्त गर्ने भएको र अन्य स्थानको राम्रा सम्पर्कले सुखको अनुभव गर्ने भएको र अन्य स्थानमा नै आफ्नू आत्मस्थिति पाउने खालको, आफ्नै जीवनको दिनचर्यामा धेरै उल्लास अनुभव गर्ने भएको तथा पुरातत्त्वको गहीरो ज्ञान र बर्ता सुख प्राप्त गर्ने भएको, भित्र हृदयमा दुःख अनुभव गर्नेवाला एवं शत्रु स्थानमा प्रभाव र शान्तिले काम बनाउन जान्नेवाला तथा मातृस्थानको तागतमा केही न्यूनता प्राप्त गर्ने र बर्ता भ्रमणशील व्यक्ति होला।

# धनु लग्नान्तर- शुक्रफलम्

जुन व्यक्तिको धनुराशिको शुक्र लग्नबाट प्रथम स्थानमा छ भने त्यो मानिस शारीरिक श्रमले आय र लाभ पाउनेवाला र शरीरमा केही रोग पनि पाउने भएको तथा धेरै ठूलो उच्च श्रेणीको चातुर्यद्वारा इच्छासिद्धि गर्ने भएको र आफूभित्र बर्ता काम-वासना भएको र व्यापारको बर्ता हेर-विचार गर्ने खालको र स्त्री स्थानमा केही विवाद र लाभ एवं प्रभाव पाउने भएको तथा निकै चातुर्यद्वारा बढी धन कमाउन जान्नेवाला तथा धन प्राप्तिका लागि परिश्रमको वास्ता नगर्नेवाला र झगडा-विवादको मामलामा फाइदा लिन अनेक उपाय जान्नेवाला, मान सम्मान पाउनेवाला, शत्रुलाई थिच्न जान्ने, श्रृंगार रस आदि बर्ता मनपराउने र प्रभावशाली व्यक्ति होला।

कु० नं० १०५१

जुन व्यक्तिको मकर राशिको शुक्र लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस धेरै धन कमाउनेवाला, धन जम्मा पार्न जान्ने, अनेक युक्तिहरूले र परिश्रमले धनको वृद्धि गर्ने काममा न्याय अन्यायको वास्ता नराख्नेवाला र जीवनमा आयको प्रभावले ठूला-ठूला प्रोत्साहन पाउनेवाला र पुरातत्त्वको लाभ पाउने भएको, धनराशिमा अधिकार प्राप्त गर्नका लागि पहिले केही विघ्न-बाधा आइलागेको सहने भएको र धनिक मावली भएको, धन वृद्धिका लागि अनेक थरिका गूढ र गहीरा युक्ति एवं चालको प्रयोग गर्नेवाला, धन संचय गर्ने शक्तिको बल द्वारा निकै ठूलो प्रभाव पाउने भएको, धनकै सम्बन्धमा कहिले केही विवाद र झगडा पनि आइलागेको सहने, आंशिक रूपमा अलि-अलि हानिहरू पनि पाउने इज्जतदार होला।

कु० नं० १०५२

जुन व्यक्तिको कुम्भ राशिको शुक्र लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस अनेक पुरुषार्थ र विभिन्न युक्तिहरूद्वारा धेरै धन लाभ वा

कु० नं० १०५३

१० ८ ११ शु. ९ ७ १२ ६ १ ३ ५ २ ४

आमदानी पाउने भएको तथा राम्रो शक्ति भएको, निकै बलशाली र प्रभावशाली तथा बढी चातुर्यहरूबाट विशेष परिश्रम गर्ने तथा दाजु-भाइको सम्बन्धद्वारा केही सहयोग र आंशिक वैमनस्यता पाउनेवाला एवं परिश्रमको सफलतामा आनन्द प्राप्त गर्ने भएको तथा पुरुषार्थ र हिम्मत, साहस तथा दगुरा-दगुरद्वारा नै लाभको शक्ति पाउनेवाला तथा भाग्यलाई थोरै महत्त्व दिने भएको तथा धर्मको सम्बन्धमा केही अरुचि झैं विचार राख्ने भएको तथा निकै कठिन र कलापूर्ण शक्तिको भर गर्दै रहनाले मनमा चिन्ता वा फिक्री नभएको व्यक्ति होला।

जुन व्यक्तिको मीन राशिको शुक्र लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस धेरै सुख प्राप्त गर्ने तथा प्रसस्त आमदानी भेट्टाउनेवाला र धेरै भवन-

कु० नं० १०५४

१० ८ ११ ९ ७ १२शु. ६ १ ३ ५ २ ४

भूमिको शक्ति पाउनेवाला, माताको विशेष लाभ र विशेष बल-प्राप्त गर्नेवाला, आफ्नू मातृस्थानमा ठूलो प्रभाव पाउनेवाला, मावली पक्षबाट सुख पाउनेवाला र आमदानीको शक्तिले निश्चिन्तता निस्फिक्री पाउने भएको, सुखका साधनहरूमा ठूला-ठूला राम्रा पदार्थ र अनेक उत्तम वस्तुहरूको भोग भोग्न पाउने भएको अनि अनेक मीठा दिव्य भोजन समयानुसार पाइरहने खालको अर्थात सुख प्राप्तिका अनेक साधनहरू चातुर्यद्वारा प्राप्त गर्दै रहने भएको अनि पिता र मान-सम्मानको स्थानमा केही न्यूनता पाउने खालको व्यक्ति होला।

जुन व्यक्तिको मेष राशिको शुक्र लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस बुद्धिको महान चातुर्य र अनेक सतर्कताको लाभ पाउने खालको अनि वृद्धि योगबाट आम्दानीको बलियो बाटो फेलापार्ने भएको, कुराकानी तथा आमदानीको सन्बन्धमा अनेक घुमाउरा तथा झंझट युक्त कामहरूबाट निकै उत्तम लाभको योजना तयार पार्न जान्नेवाला, विद्या तथा बुद्धिमा पनि चातुर्यको नै प्रभाव भेट्टाउने किसिमको अनि सन्तान लाभ पाउने भए पनि सन्तान सम्बन्धमा आंशिक न्यूनता र अपठेरोको योग पाउनेवाला, शत्रु पक्षलाई केवल बुद्धियोगद्वारा पराजित गर्नेखालको बाठो व्यक्ति होला।

कु० नं० १०५५

१० ८
११ ९ ७
१२ ६
१शु. ३ ५
२ ४

जुन व्यक्तिको वृष राशिको शुक्र लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस निकै प्रभावशाली झगडा-विवाद मनपराउने र त्यसैबाट फाइदा र आमदानीको योग पाउनेवाला, आमदानीको सम्बन्धमा केही परिश्रम र केही कष्ट-बाधाले वा प्रभावद्वारा धन पाउनेवाला, त्यसको साथै यस कुराको विशेष ध्यान राख्ने- कि आमदानीमा कमी वा बाधा परोस् तर प्रभावमा कतैबाट पनि कमी आउन नपाओस् एवं बढी धन व्यय गर्ने र केही परतन्त्रताको योगबाट आमदानी भेट्टाउने, परिश्रम र मावली पक्षबाट लाभको योग पाउनेवाला, लाभको सम्बन्धमा केही कमी र अन्य स्थानको सम्पर्क पाउनेवाला, गहीरो चातुर्यवाला, धेरै ठूलो घुमाउरो चाल चल्ने र बढी क्रोधी प्रकृतिको साहसी होला।

कु० नं० १०५६

१० ८
११ ९ ७
१२ ६
१ ३ ५
२शु. ४

जुन व्यक्तिको मिथुन राशिको शुक्र लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस बर्ता चातुर्यहरूले व्यापारमा धन कमाउने खालको, व्यापारमा केही परिश्रम र केही बठ्याइँले काम गर्ने भएको एवं स्त्री स्थानमा राम्रो सहयोग पाउनेवाला र स्त्री पक्षमा केही झगड़ा-विवाद वा वैमनस्यता पाउनेवाला, स्त्रीमा केही कथा र सुन्दरता एवं नखरमाउलो-पना भएको, विशेष भोगको इच्छा राख्ने खालको, सौन्दर्य मनपराउने भएको, स्त्रीमा केही रोग वा अलि दुर्बलता पाउने भएको, व्यापार तथा गृहस्थ जीवनमा निकै बर्ता प्रभाव एवं फाइदा पाउने किसिमको, मान-सम्मान प्राप्त गर्नेवाला, बढी होशियार तथा लौकिक कार्य-कुशल व्यक्ति होला।

कु० नं० १०५७

१० ८ ११ ९ ७ १२ ६ १ ३शु. ५ २ ४

जुन व्यक्तिको कर्क राशिको शुक्र लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस लाभ र आमदानीका लागि निकै कष्ट-बाधा सहने भएको, प्रभावमा न्यूनता पाउनेवाला, लाभ प्राप्तिका लागि अत्यन्त गूढ र कठोर भन्दा पनि कठोर युक्तिहरूमा काम गर्ने र पुरातत्वको लाभ पाउने भएको एवं धन-वृद्धिको लागि महान प्रयत्न गर्दै रहने खालको, लाभमा धेरै कमी अनुभव गर्ने भएको, लाभका लागि अन्यान्य स्थानमा पनि प्रयत्न गर्ने भएको, मावली पक्षमा केही हानि पाउने खालको, जीवनको दैनिक दिनचर्यामा केही उत्साह पाउने भएको र निकै ठूलो नीतिज्ञ र शत्रुलाई थिच्नको निम्ति निकै ठूलो चाल चल्न जान्ने खालको होला।

कु० नं० १०५८

१० ८ ११ ९ ७ १२ ६ १ ३ ५ २ ४शु.

जुन व्यक्तिको सिंह राशिको शुक्र लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस भाग्यको बलले लाभ पाउने भएको तर लाभको सम्बन्धमा केही

कु० नं० १०५९

१० ८ ११ ९ ७ १२ ६ १ ३ ५शु. २ ४

अपठेरो भेट्ने खालको अनि आफ्नू भाग्यको उन्नतिको बाटोमा केही बाधा, तगारो र केही अपठेरोको योग भेट्टाउनेवाला तथा लाभ र भाग्यको लागि ठूला-ठूला युक्तिहरू बराबर प्रयोग गरिरहने खालको, तर भाग्योदयको सम्बन्धमा केही निराशा र ढीलोको योग पाउनेवाला तथा धर्म-कर्मको सम्बन्धमा केही अरुचि सहित धर्मको पालन करले गर्नेवाला, पुरुषार्थको वृद्धिबाट धन-लाभ पाउने खालको र दाजु-भाइ दिदी-बहिनीको पक्षमा केही सम्पर्क पाउनेवाला, साहसी बढी बाढो तथा धर्म-कर्मको आडमा आफ्नू लाभ हुने उपाय गरिरहने खालको होला।

जुन व्यक्तिको कन्या राशिको शुक्र लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस पिता स्थानमा क्लेश र केही न्यूनताको योग पाउनेवाला तथा

कु० नं० १०६०

१० ८ ११ ९ ७ १२ ६शु. १ ३ ५ २ ४

व्यापारादिमा र उन्नतिको पक्षमा न्यूनताहरू पाउने भएको, आमदानीको पक्षमा दुर्बलता पाउने भएको, मातृ स्थानको वृद्धि र मावली पक्षको दुर्बलता पाउने भएको सुखको वृद्धि भेट्टाउने, भूमि स्थानको शक्ति र लाभ पाउने खालको, निकै बांगा र बटारिएका साना-ठूला कर्मलाई अनेक युक्तिहरूबाट आफ्नू इच्छासिद्धि गर्नेवाला, प्रभाव र मान-सम्मानको विषयमा पनि दुर्बलता नै पाउने भएको, केही पूर्व संचित पापको फल भोग्नमा अनेक कष्ट र मानहानि पाउने खालको व्यक्ति होला।

जुन व्यक्तिको तुला राशिको शुक्र लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस बढी धन व्यय गर्नेवाला, धेरै आमदानी भेट्टाउने भएको तथा अनेक चातुर्यका साथै विशेष धन लाभको योजना पाउनेवाला, केही परिश्रमको योग पनि लाभको सम्बन्धमा पाउने खालको तर लाभ प्राप्तिको ठूलो दृढतावाला, विद्यामा पनि अनेक युक्तिहरूबाट लाभको युक्ति उत्पन्न गर्ने भएको, सन्तान पक्षमा केही विघ्न-बाधा सहित लाभ कमाउने, द्रव्य प्राप्तिको निम्ति पाप र पुण्यको कुनै ध्यान नगर्ने र शत्रु पक्षबाट लाभ पाउने किसिमको होला।

कु० नं० १०६१

१० ८ ११ ९ ७शु. १२ ६ १ ३ ५ २ ४

जुन व्यक्तिको वृश्चिक राशिको शनि लग्नबाट बाहौं स्थानमा छ भने त्यो मानिस बढी धन खर्च गर्नेवाला र अन्यान्य स्थानबाट परिश्रमद्वारा विशेष लाभ पाउनेवाला, पूर्ण लाभ सबै खर्च गरिदिनाले नै धन लाभको कमी पाउनेवाला, अनेक कष्ट-बाधाहरूको सम्बन्धमा खर्च गर्ने भएको र अनेक प्रकारका चातुर्यहरूबाट र विघ्न-बाधाहरूबाट उल्टो-सोझो कारणहरूबाट आफ्नू काम चलाउने भएको र केही न्यूनताका साथै शत्रुमा प्रभाव पार्नेवाला र मावली पक्षको केही हानि पाउनेवाला, लाभको लागि केही अन्यायद्वारा पनि काम चलाउन जान्ने र बाठो व्यक्ति होला।

कु० नं० १०६२

१० ८शु. ११ ९ ७ १२ ६ १ ३ ५ २ ४

# धनु लग्नान्तर - शनिफलम्

जुन व्यक्तिको धनु राशिको शनि लग्नबाट प्रथम स्थानमा छ भने त्यो मानिस निकै ठूलो पुरुषार्थ तथा परिश्रमी र दगुरा-दगुर गरेर धन वृद्धि गर्ने भएको र दाजु-भाइ दिदी-बहिनीको शक्ति पाउनेवाला शरीरमा केही अशान्ति या केही न्यूनता अनुभव गर्ने, तर देह-बलले ठूला-ठूला कीमती काम गर्ने भएको र मानोन्नति प्राप्त गर्ने खालको ठूलो व्यापार गर्न जान्ने, निकै साहसिलो काम गर्ने खालको तथा उत्साहयुक्त रहने र स्त्री एवं पिताको शक्तिबाट सम्पर्क पाउने भएको र शरीरमा बल वृद्धिका लागि अनेक कारण उत्पन्न गर्ने भएको अनि धन र कुटुम्बको शक्तिको परिमार्जित केही वैमनस्यता प्राप्त गर्ने खालको उत्साही व्यक्ति होला।

कु० नं० १०६३

१० ८ ११ ९श. ७ १२ ६ १ ३ ५ २ ४

जुन मनुष्यको मकर राशिको शनि लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस ठूलो धनी तथा पुरूषार्थले धन-वृद्धि गर्ने साधन भेट्टाउने र भवन-भूमिको वृद्धि गर्ने भएको तर मातृस्थानमा केही हानिको योग पाउने भएको, निकै उच्च आमदानी पाउने तथा धन-लाभ पाउनका लागि निकै बढी शक्तिको प्रयोग गर्न जान्ने तथा जीवनको दिनचर्यामा केही अशान्ति पाउनेवाला, तथा सुखका साधनहरूमा वास्तविक रूपमा कमी पाउने भएको तर देखाउँदा सुखको वृद्धि भएको देखाउने, दाजु-भाइ दिदी-बहिनीको न्यूनता र कुटुम्बको वृद्धि पाउनेवाला, पुरातत्त्वको हानि पाउने खालको व्यक्ति होला।

कु० नं० १०६४

१०श. ८ ११ ९ ७ १२ ६ १ ३ ५ २ ४

जुन व्यक्तिको कुम्भ राशिको शनि लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस ठूलो पुरुषार्थ गरेर धन कमाउने भएको र धन शक्तिको सम्बन्ध हुने काममा छोटो बुद्धिद्वारा काम सिद्ध पार्ने भएको एवं कटु र तीखो वाणी बोल्ने भएको, विद्यामा कमी पाउनेवाला, सन्तान पक्षमा पनि केही न्यूनता र क्लेशको योग पाउने खालको तथा खर्चको सम्बन्धमा केही गाह्रो माने झैं गरेर बढी व्यय गर्ने भएको, भाग्यमा यशको केही न्यूनता पाउनेवाला अनि धर्म-कर्ममा केही अश्रद्धा राख्ने खालको तथा दाजु-भाइ दिदी-बहिनीको सम्बन्धमा केही वृद्धि र बन्धन पाउने भएको र बढी कीमती परिश्रम र पुरुषार्थ गर्ने खालको व्यक्ति होला।

कु० नं० १०६५

१० ८ ११ श. ९ ७ १२ ६ १ ३ ५ २ ४

जुन व्यक्तिको मीन राशिको शनि लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस धनको सम्बन्धमा एक प्रकारको विचित्र सुख-दुःखको अनुभव गर्ने भएको, मातृस्थानमा केही विमाताको योग पाउनेवाला तथा भूमि-भवनको प्रथम हानि भएपछि वृद्धिको योग पाउने खालको, धनको सम्बन्धमा बढी परिश्रम वा थकान द्वारा या दाजु-भाइसित केही अशान्तिको योग पाउनेवाला, स्त्री स्थानमा राम्रो प्रभाव राख्नेवाला र पिता स्थानबाट केही राम्रो खाले या फाइदाको योग पाउने भएको तथा रोग झगडा विवाद अथवा विघ्न-बाधाको सम्बन्धमा आफ्नू धन र प्रभाव शक्तिद्वारा सुन्दर काम सिद्ध पार्ने, शरीरले अशान्तिप्रद व्यक्ति होला।

कु० नं० १०६६

१० ८ ११ ९ ७ १२श. ६ १ ३ ५ २ ४

जुन व्यक्तिको मेष राशिको शनि लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस आफ्नू बुद्धिको कठिन परिश्रमद्वारा धनको वृद्धि पाउने भएको, धनको संचित वृद्धिको सम्बन्धमा चिन्तित रहने खालको र धन-वृद्धिले गर्दा केही तीतो वाणी बोल्ने भएको र केही लुकाउने बुद्धिद्वारा काम सिद्ध पार्नेवाला र सन्तान पक्षमा केही न्यूनता र क्लेशको योग पाउने भएको र विद्यामा न्यूनता पाउने खालको र कुरा-कानीको शब्द शैलीमा पनि आफू भित्र केही न्यूनता अनुभव गर्ने खालको र व्यापारमा वृद्धि गर्न जान्ने भएको, स्त्री स्थानमा केही विशेष शक्ति पाउने भएको, बुद्धिको कठिन परिश्रमबाट निकै बढी नाफाखान जान्ने भएको, बढी धन कमाउन सक्ने खालको व्यक्ति होला।

कु० नं० १०६७

१० ८
११ ९ ७
१२ ६
१श. ३ ५
२ ४

जुन व्यक्तिको वृष राशिको शनि लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस धन तर्फबाट केही दुर्बलता पाउने र दाजु-भाइसित विरोध गर्ने भएको तर दाजु-भाइकै शक्तिको सहयोग पनि पाउने खालको तथा धनतर्फबाट प्रभाव राख्ने भएको, केही गुप्त युक्तिहरूबाट पुरुषार्थद्वारा धन प्राप्त गर्ने तथा धनको तागतको सहारा लिएर जबरदस्त बल पुरुषार्थ प्राप्त गर्ने भएको निकै ठूलो प्रभावशाली र शत्रुलाई पराजित गर्नेवाला र मावली पक्षको केही शक्ति पाउनेवाला, रोग र कष्टलाई थिच्न जान्नेवाला र खर्चमा केही दुर्बलता पाउनेवाला र जीवनको दिनचर्यामा केही विघ्न-बाधा पाउनेवाला र गूढ युक्तिहरू जान्ने खालको, निकै बहादुर अर्कालाई डाँकोले थर्काउने होला।

कु० नं० १०६८

१० ८
११ ९ ७
१२ ६
१ ३ ५
२श. ४

जुन व्यक्तिको मिथुन राशिको शनि लग्नबाट सतौं स्थानमा छ भने त्यो मानिस व्यापारमा उन्नति गर्ने भएको, परिश्रमले धन कमाउने र भाग्य स्थानमा केही कष्ट अनुभव गर्ने भएको र शरीरमा केही कमीको योग पाउनेवाला तथा माता-पिताको स्थानमा केही हानि वा अशान्ति पाउनेवाला, सुखका साधनहरूमा केही न्यूनता पाउने भएको र सुख एवं जीवनको वृद्धिको लागि धेरै धन कमाउने भएको तथा धर्ममा सहयोग नदिने र यशको कमी पाउने, स्त्री स्थानमा शक्ति पाउने भएको र तामसी धर्म प्रयोग गर्नेवाला, व्यापारको वृद्धिको लागि परिश्रम र धनको पूरा शक्ति प्रयोग गर्ने र बर्ता भोग-विलास रुचाउने होला।

कु० नं० १०६९

१० ८ ११ ९ ७ १२ ६ १ ३श. ५ २ ४

जुन व्यक्तिको कर्क राशिको शनि लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस धन-जनको न्यूनता पाउने खालको तथा धनको तर्फबाट अनेक हानिहरू पाउने भएको कौटुम्बिक क्लेश सहन गर्नेवाला तथा पुरातत्त्व धन र शक्तिको फाइदा पाउनेवाला तथा बुद्धि र विद्यामा निकै कमी पाउने खालको र धनको वृद्धिका लागि केही स-साना विचारधाराले कुराकानी गरेर आफ्नू काम सिद्ध पार्न जान्ने भएको र सन्तान पक्षमा केही चिन्ताहरूका कारण भेट्टाउने भएको र उन्नतिको शिखरमा पुग्नका लागि केही विशेष कर्म र विशेष परिश्रम गर्नेवाला एवं दाजु-भाइ दिदी-बहिनीको सम्बन्धमा केही बाधा र केही धन वृद्धिमा सहयोगको कारण पाउनेवाला तथा आयुमा वृद्धि पाउने भएको, गुप्त वृद्धि र गूढ युक्ति प्रयोग गर्न जान्ने खालको व्यक्ति होला।

कु० नं० १०७०

१० ८ ११ ९ ७ १२ ६ १ ३ ५ २ ४श.

जुन व्यक्तिको सिंह राशिको शनि लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस भाग्य-शक्तिको बलबाट र पुरुषार्थको सहयोबाट धनको वृद्धि गर्नेवाला र धेरै आमदानी पाउनेवाला तथा दाजु-भाइको सहयोग अलि गाह्रो मानेर भए पनि उत्तम र लाभप्रद पाउने भएको र धर्मको सम्बन्धमा केही अरुचिका साथ सहयोग सम्बन्ध राख्ने भएको र भाग्यलाई बराबर मान्दै रहे पनि पुरुषार्थको प्रधानता स्वीकार गर्नेवाला र धन एवं परिश्रमको योगद्वारा प्रभाव शक्तिलाई स्वतः प्राप्त गर्न सक्ने भएको र शत्रुस्थानमा पनि प्रभाव जमाउनेवाला, रोग र विघ्न-बाधामा विजय पाउने भएको तथा मावली पक्षबाट केही सहयोग सम्बन्ध पाउने खालको व्यक्ति होला।

कु० नं० १०७१

१० ८
११ ९ ७
१२ ६
१ ३ ५श.
२ ४

जुन व्यक्तिको कन्या राशिको शनि लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस आफ्नू शक्तिले राज्य सत्ताको गौरव प्राप्त गर्नेवाला तथा आफ्नू पुरुषार्थले धेरै उन्नति गर्ने भएको एवं धन कमाउने खालको र बर्ता शान अभिमानले काम गर्ने भएको र बढी धन खर्च गर्नेवाला, प्रभावशाली व्यापार गर्नेवाला अन्य स्थानको शक्तिमा वैमनस्यताको सम्पर्क पाउने भएको दाजु-भाइको कुनै निकट सम्बन्ध नपाउनेवाला र स्त्री स्थानमा केही महानता र बन्धन पाउने भएको र पिता स्थानमा आफ्नू पुरुषार्थ शक्तिको आनन्द पाउने खालको र व्यापारको उन्नतिका लागि पूर्ण शक्तिको प्रयोग गर्नेवाला, हठी व्यक्ति होला।

कु० नं० १०७२

१० ८
११ ९ ७
१२ ६श.
१ ३ ५
२ ४

जुन व्यक्तिको तुला राशिको शनि लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस बढी धन कमाउने भएको तथा बर्ता लाभ पाउने भएको, बढी प्राप्तिको लागि कुराकानीमा केही झर्किने तथा कटुवाणी बोल्नेवाला, बुद्धि र विद्यामा न्यूनता पाउने खालको र शरीरमा केही कमी वा बाधा-कष्ट, केही बन्धन झैं प्राप्त गर्नेवाला तथा जीवनको दिनचर्यामा पनि केही बन्धन वा परेशानी भोग्ने भएको तथा दाजु-भाइको राम्रो सहयोगग पाउने भएको, सन्तानमा केही कमी वा क्लेश पाउने भएको तथा कौटुम्बिक शक्तिको लाभ उच्च श्रेणीको पाउने भएको, ठूलो धनवान् तथा अधिक नाफा कमाउने र बढी हिम्मतवाला, धन-जन तथा पुरुषार्थ बलबाट अनेक लाभ पाउने खालको व्यक्ति होला।

कु० नं० १०७३

१० ८
११ ९ ७श.
१२ ६
१ ३ ५
२ ४

जुन व्यक्तिको वृश्चिक राशिको शनि लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस बढी धन व्यय गर्ने भएको तथा खर्च शक्तिको साथै केही कष्टले धन पाउने खालको, धन प्राप्तिको सम्बन्धमा अन्यान्य स्थानको सम्पर्क पनि पाउने भएको तथा धन-जनको अपूर्ण तागत पाउनेवाला तर धनीहरूको जस्तो धाक देखाउने खालको तथा भाग्यमा दुर्बलता पाउनेवाला, धर्म-कर्मको पालन ठीकसित गर्न नसक्ने भएको, धनको र पुरुषार्थको भाग्यमा केही चिन्ताहरू पाउने खालको तथा यशको न्यूनता पाउने भएको, शील सन्तोषको पालन गर्न नसक्ने खालको तथा शत्रु स्थानमा प्रभाव जमाउने प्रयत्नमा लागिरहने भएको र दाजु-भाइको विरोधी व्यक्ति होला।

कु० नं० १०७४

१० ८श.
११ ९ ७
१२ ६
१ ३ ५
२ ४

# धनु लग्नान्तर-राहुफलम्

जुन व्यक्तिको धनुराशिको राहु लग्नबाट प्रथम स्थानमा छ भने त्यो मानिस शरीरमा कष्ट र झ्याउलो सहन गर्नेवाला र कहिले काहीं देहमा आघात सहनेवाला अर्थात् शरीरमा चोट पाउनेवाला र आफूभित्रको गुप्त शक्तिद्वारा आफ्ना अनेक काम सिद्ध पार्न जान्ने, आफ्नू उन्नति र सम्मान रक्षाका लागी निकै कष्टसाध्य कर्म गर्न अघिसर्नेवाला, अनेक युक्तिहरू र फाइदाहरूबाट काम बनाउन जान्नेवाला र अनधिकार लाभको लागि ठूला-ठूला विपत्तिहरू बोक्न सक्ने खालको, मान-सम्मानमा केही कमी पाउने भएको, कहिले काहीं परतन्त्रताको योग पाउने खालको व्यक्ति होला।

कु० नं० १०७५

१० ८ ११ ९रा. ७ १२ ६ १ ३ ५ २ ४

जुन व्यक्तिको मकर राशिको राहु लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस धन स्थानमा केही हानि पाउने र कुटुम्ब स्थानमा केही क्लेश सहने भएको एवं धन वृद्धिका लागि ठूला-ठूला गहीरा युक्तिहरू प्रयोग गर्नेवाला, हिम्मत र साहसद्वारा धनको पूर्ति गर्ने खालको तथा धनको कारणले कहिले काहीं निकै सन्ताप सहने खालको, धनको वृद्धिको लागि कहिले काहीं खतरा बोक्ने खालको तथा धनको पूर्ण दृढता प्राप्त गर्नमा बराबर लागिरहने भएको, अन्त्यमा कुनै न कुनै उपायले केही दृढता पाएरै छाड्ने भएको, धनको लागि गुप्त शक्तिको प्रयोग गर्ने खालको व्यक्ति होला।

कु० नं० १०७६

१०रा. ८ ११ ९ ७ १२ ६ १ ३ ५ २ ४

जुन व्यक्तिको कुम्भराशिको राहु लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस निकै ठूलो पुरुषार्थ गर्ने भएको, निकै साहस र हिम्मतले काम सपार्न जान्नेवाला, निकै दगुरा-दगुर गर्न सक्नेवाला, ठूला-ठूला कामको लागि ती जति सुकै कष्टदायक भए पनि त्यसलाई पूर्ण पार्नका लागि तुरुन्त तत्पर हुन सक्ने खालको, ठूला-ठूला जबरदस्त युक्तिहरू प्रयोग गरेर सफलता प्राप्त नगरी शान्त नबस्ने भएको दाजु-भाई दिदी-बहिनीको स्थानमा बाधा पाउने खालको, बल पौरुष भित्र केही दुर्बलता अनुभव गर्ने भएको, पुरुषार्थको उन्नतिका लागि अन्तमा कुनै बलियो तहसम्म पुग्ने खालको व्यक्ति होला।

कु० नं० १०७७

१० ८
११ रा. ९ ७
१२ ६
१ ३ ५
२ ४

जुन व्यक्तिको मीन राशिको राहु लग्नबाट चौथों स्थानमा छ भने त्यो मानिस मातृस्थानमा केही हानि र क्लेश सहनेवाला तथा सुखस्थानमा अनेक थरिका बाधा-कष्ट पाउने भएको तथा भूमि-भवन आदिको सम्बन्धमा केही क्लेश र केही न्यूनताको योग पाउनका लागि ठूला-ठूला प्रयत्न गर्ने भएको तथा अन्त्यमा निकै ठूला अशान्तिहरू पछि कुनै सुखको उन्नति पाउने भएको तथा सुख प्राप्तिका साधनहरू पाउनका लागि अनेकानेक विचित्र युक्तिहरूको प्रयोग चिन्तित भएर पनि गर्दै रहने भएको र केही अन्यको सहारा लिएर सुखको न्यूनता पूरा गर्ने भएको र मातासित वा जन्मभूमिसित केही विछोड पनि पाउने खालको होला।

कु० नं० १०७८

१० ८
११ ९ ७
१२रा. ६
१ ३ ५
२ ४

जुन व्यक्तिको मेष राषिको राहु लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस विद्यामा कमी पाउने भएको र सन्तान पक्षबाट न्यूनताको कष्ट सहने खालको तथा वृद्धिको स्थानमा कटुता र गुप्त शक्तिद्वारा काम सिद्ध पार्नेवाला र शीलको उल्लङ्घन गर्ने भएको, शब्दको सत्यता प्रदर्शित गरेर आफ्नू काम पूर्ण पार्ने वास्तवमा सत्य असत्यको वास्ता नगर्ने खालको र बुद्धिद्वारा र वाणीले निकै गहीरा चालहरू चल्न जान्ने र बुद्धिमा सदैव कुनै गहीरो स्वार्थको विचार गरिरहने खालको र विद्या एवं बुद्धि तथा सन्तान पक्षको कुनै दह्रो फाइदा प्राप्त हुने, अन्त्यसम्म केही न केही सफल प्रयास गर्ने खालको व्यक्ति होला।

कु० नं० १०७९

१० ८
११ ९ ७
१२ ६
१रा. ३ ५
२ ४

जुन व्यक्तिको मेष राषिको राहु लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस निकै प्रभावशाली तथा शत्रुको दमन गर्न समर्थ हुने खालको र मावली पक्षबाट हानिको योग पाउने भएको र अनेक झ्याउला एवं कष्ट-बाधाको वास्ता नगरेर तथा विपक्षीहरूको प्रतिस्पर्धामा ठूला-ठूला दाउ-पेंचका चालहरू प्रयोग गरेर आफ्नू काम सपार्नेवाला अनि ठूल-ठूला र गहीरा युक्तिहरूको बलबाट र हिम्मतको बलले कुनै ठूलो स्वार्थ सिद्ध पार्ने खालको र शीलको उल्लंघन गर्ने भएको तथा महान साहस र धैर्यले काम गर्न जान्ने भएको तथा कहिले काहीं बढी विपत्तिहरूको घेरामा पर्ने खालको र भित्री शक्ति र युक्तिमा केही दुर्बलता अनुभव गर्ने भएको एवं कूटनीतिज्ञ तथा वास्ता नगर्ने खालको व्यक्ति होला।

कु० नं० १०८०

१० ८
११ ९ ७
१२ ६
१ ३ ५
२रा. ४

जुन व्यक्तिको मिथुन राशिको राहु लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस व्यापारमा ठूला-ठूला महान युक्तिहरूले काम गर्न जान्ने खालको र व्यापारको उन्नतिका लागि कुनै कठोर दगुरा-दगुरको विशेष योजनाहरू बनाउने भएको र आफ्नू काम चारैतिर फिजाएर अनि धन कमाउने तथा राम्रो सच्चाई र सभ्यता दर्शाएर काम गर्न जान्ने भएको र निको ठूलो साहसले व्यापार चलाउने खालको अनि स्त्रीको सम्बन्धबाट केही बर्ता एवं वृद्धि तथा लावण्यताको योग पाउनेवाला र इच्छित भोग प्राप्त गर्नेवाला तथा लौकिक प्रणालीमा बडो होशियार र ठग-ठग पार्न जान्ने र त्यही काम रुचाउने खालको व्यक्ति होला।

कु० नं० १०८१

१० ८
११ ९ ७
१२ ६
१ ३रा. ५
२ ४

जुन व्यक्तिको कर्कराशिको राहु लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस आफ्नू जीवनमा अनेक कष्ट-बाधा सहन गर्नेवाला, पेट र गुदाको सम्बन्धमा केही लाञ्छना सहन गर्नेवाला अर्थात् कतिपय व्याधीहरू र कबज इत्यादिको योग पाउने खालको एवं पुरातत्त्वको संचित शक्तिहरूमा हानि पाउने भएको र जीवनको दिनचर्यामा विघ्न-बाधा पाउने भएको तथा गूढ र प्राप्त युक्तिहरूलाई पुरातत्त्वको सम्बन्धमा व्यवहार वा प्रयोग गर्नमा अनेक कष्ट-बाधा पाउनेवाला, गुप्त चिन्तामा गाडिइरहने भएको अनि विदेश आदि आउने-जाने यात्राको सम्बन्धमा पनि दुःख अनुभव गर्ने खालको व्यक्ति होला।

कु० नं० १०८२

१० ८
११ ९ ७
१२ ६
१ ३ ५
२ ४रा.

जुन व्यक्तिको सिंह राशिको राहु लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस आफ्नू भाग्यमा बर्ता चिन्ता मान्नेवाला र भाग्योदयको सम्बन्धमा पनि अनेक विघ्न-बाधा र दुःख-कष्ट एवं हानिहरू पाउनेवाला र धर्मको सम्बन्धमा अनेकानेक दुर्बलता पाउने खालको र यथार्थ धर्मको पालन गर्न नसक्ने भएको तथा धर्मलाई हानि पुऱ्याउने खालको र धर्मको वास्तविक ज्ञान नबुझ्ने वाला र धर्मको आडम्बरलाई अलि-अलि मान्ने र बुझ्ने खालको र अनेक थरिका झ्याउला र सोझा-बाँगा तथा निकै दिनपछि भाग्य उदयको तहसम्म पुग्ने भएको र यशको न्यूनता पाउनेवाला तथा फारुतिनो गर्न नसक्ने खालको व्यक्ति होला।

कु० नं० १०८३

१० ८
११ ९ ७
१२ ६
१ ३ ५रा.
२ ४

जुन व्यक्तिको कन्याराशिको राहु लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस आफ्नू उन्नति प्राप्त गर्नका लागि ठूला-ठूला जबरदस्त युक्तिहरूको प्रयोग गर्नेवाला र धेरै ठूलो विपत्तिमा हाम्फालेर पूर्ण धैर्यसाथ आफ्नू इज्जत र कामको दृढतालाई समाउन सक्ने खालको तथा पिताको सम्बन्धमा केही अपूर्ण सुख शक्ति प्राप्त गर्ने भएको र बन्द-व्यापारमा अनेकानेक गुप्त युक्तिहरूबाट काम गर्न जान्ने खालको र साना-ठूला चातुर्यद्वारा मान उन्नति पाउने भएको तथा राज-काजमा पनि आफ्नू-चातुर्यहरू द्वारा सत्यता दर्शाएर लाभ प्राप्त गर्ने खालको र समाजसित सम्बन्धित कर्म योगमा सफलता र अनेक चिन्ता पाउनेवाला व्यक्ति होला।

कु० नं० १०८४

१० ८
११ ९ ७
१२ ६रा.
१ ३ ५
२ ४

जुन व्यक्तिको तुलाराशिको राहु लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस अनेक लाभ प्राप्त गर्नेवाला तथा आमदानीको सम्बन्धमा निकै दृढताले काम लिन जान्ने तथा बढी लाभ पाउनका लागि अनेकानेक प्रकारबाट गुप्त र बाङ्गा युक्तिहरूको प्रयोग गर्न जान्ने खालको र लाभ प्राप्तिको निम्ति कठिन कार्यहरू गरेर लाभका साधनहरूको जरो बलियो पार्नेवाला र लाभको निम्ति अनेक ठूला-ठूला विपत्तिहरू पनि बोक्न तयार हुने र त्यसमा गाह्रो नमान्ने अनि लाभ प्राप्तिको लागि सत्य-असत्यको पनि वास्ता नगर्नेवाला र लाभको सम्बन्धमा पूर्ण स्वार्थयुक्त बनिरहने भएको तथा तत्परता र साहस राख्ने खालको व्यक्ति होला।

कु० नं० १०८५

१० ८ ११ ९ ७रा. १२ ६ १ ३ ५ २ ४

जुन व्यक्तिको वृश्चिक राशिको राहु लग्नबाट बान्हौं स्थानमा छ भने त्यो मानिस बढी धन व्यय गर्नेवाला र खर्चकै कारणले कष्ट र क्लेश सहन गर्ने भएको र खर्चको सम्बन्धमा झ्याउलाबाट जोगिनका लागि अनेक युक्तिहरू प्रयोग गर्नेवाला एवं त्यति गर्दा पनि कष्टहरू द्वारा नै काम चलाउने भएको र अन्यान्य स्थानको सम्बन्धमा पनि अनेक कष्ट सहने खालको र खर्चको सीमामा अनेक थरिका युक्तिहरू प्रयोग गरेर तथा साहस र हिम्मतले काम पूरा गर्ने भएको अनि खर्च संचालको स्थानमा पूर्ण दृढता पाउनका लागि साना-ठूला प्रयत्न गरिरहने भएको तथा खर्चको लागि सत्य असत्य परिश्रम र आराम केही पनि विचार्न नसक्ने खालको व्यक्ति होला।

कु० नं० १०८६

१० ८रा. ११ ९ ७ १२ ६ १ ३ ५ २ ४

# धनु लग्नान्तर-केतुफलम्

कु० नं० १०८७

१० ८
११ ९के. ७
१२ ६
१ ३ ५
२ ४

जुन व्यक्तिको धनुराशिको केतु लग्नबाट प्रथम स्थानमा छ भने त्यो मानिस अग्लो कद भएको र बहादुरी राख्ने भएको, धेरै दगुरा-दगुर गर्ने भएको, अभिमान र हठधर्मीसित बस्ने-वाला, अन्धविश्वास, उदासीनता आफूभित्र राख्ने भएको, शरीरमा भित्री निकै दृढता पाउने खालको अनि शरीरको सौन्दर्यमा केही कमी पाउने खालको, आफूलाई 'म ठूलो' भन्ने वा महान तुल्याउन खोज्ने, गहीरा युक्तिहरूको निकै लामो प्रयोग गर्ने र गुप्त शक्तिको निकै ठूलो दावी गर्ने भएको, बहादुरीको पनि निकै दावी गर्ने खालको, स्वार्थयुक्त धेरै बोल्ने अनि शरीरमा कहिले-काहीं आघात र महान् सङ्कट सहने खालको व्यक्ति होला।

कु० नं० १०८८

१०के. ८
११ ९ ७
१२ ६
१ ३ ५
२ ४

जुन व्यक्तिको मकर राशिको केतु लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिन धनको सम्बन्धमा निकै सङ्कट सहनेवाला अनि कुटुम्ब स्थानमा बढी हानि पाउनेवाला र धनको पक्षमा निकै बढी धैर्य र साहसद्वारा आफ्नू काम सपार्न जान्ने तथा धन वृद्धिका लागि सकेसम्म शक्तिको प्रयोग गर्ने भएको तथा धनको संचित शक्तिमा अपूर्णता पाउनेवाला, धनको अमर शक्ति पाउनका लागि निकै बढी प्रयत्न गर्ने भएको अनि अनेक विपत्तीहरू पछि कुनै बलियो शक्तिको सम्बन्ध भेट्टाउने खालको, धनको निम्ति अनेक साना-ठूला र गहीरा युक्तिहरू प्रयोग गर्न जान्ने, धनसंचय गर्नका लागि सदैव प्रयत्न गर्दै रहने खालको व्यक्ति होला।

जुन व्यक्तिको कुम्भराशिको केतु लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस दाजु-भाईको स्थानमा केही हानि पाउने भएको र लामा

कु० नं० १०८९

१० ८
११ के. ९ ७
१२ ६
१ ३ ५
२ ४

बाहुवाला, आफ्नू उन्नतिका लागि निकै बर्ता दगुरा-दगुर र परिश्रम गर्नेवाला, साना ठूला प्रयत्न र साहसले उन्नतितर्फ दगुर्ने वाला, पुरुषार्थको निकै वृद्धि गर्नेवाला, आफ्नू शक्तिभित्र केही न्यूनता भएर पनि दुर्बलताको वास्ता कत्ति पनि नगर्ने, निकै प्रभावमा रहने भएको, निकै ठूलो शक्तिको संचार आफूभित्र अनुभव गर्ने खालको व्यक्ति होला।

जुन व्यक्तिको मीन राशिको केतु लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस मातृस्थानमा क्लेश पाउनेवाला र माताको हानि अथवा वियोग

कु० नं० १०९०

१० ८
११ ९ ७
१२के. ६
१ ३ ५
२ ४

पाउनेवाला अनि जन्मभूमिबाट केही वियोग वा परदेश पाउनेवाला हुन सक्तछ, अनि सुखको सम्बन्धमा केही कमी र अशान्तिको योग पाउने खालको आशागर्नेवाला तथा निकै ठूलो कूटनीतिद्वारा दृढतापूर्वक अगाडि सर्नेवाला, रोग र विपक्षीहरू माथि काबू पाउने भएको, निकै ठूलो उन्नतिको गुप्त र गहीरा योजनाहरू तयार पार्ने भएको र आफूभित्र भविष्यको दृढता सहित अमर आशा राखेर वृद्धितिर दगुर्दै रहने खालको तथा विजयी रहने भएको अनि शीलको वास्ता नगरेर स्वार्थयुक्त कर्म गर्ने खालको व्यक्ति होला।

जुन व्यक्तिको मेषराशिको केतु लग्नबाट पाँचौं स्थानमा छ भने, त्यो मानिस सन्तान पक्षबाट कष्ट सहनेवाला तथा विद्या ग्रहण गर्नमा निकै इयाउलाहरू सहने भएको तर त्यसको अन्त्यसम्म पुग्नमा लागिरहने खालको तथा विद्या स्थानमा अनेक निराशाहरूको योग पाउनेवाला तथा ठीक प्रकारले आफ्ना कुरा बुझाउन नसक्ने किसिमको तथा केही कटुवाणी बोल्ने भएको तथा दिमाग भित्र बर्ता तेजी राख्नेवाला अनि शील सत्यको उल्लंघन गर्नेवाला, गहीरो स्वार्थ विचार्नेवाला जिद्दी स्वभावको व्यक्ति होला।

कु० नं० १०११

१० ८
११ ९ ७
१२ ६
१के. ३ ५
२ ४

जुन व्यक्तिको वृषराशिको केतु लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस निकै बर्ता बहादुरी गर्ने प्रकृति भएको तथा शत्रुलाई दमन गर्ने खालको र निकै जोसले आफ्नू काम सिद्ध पार्ने अनि मावली पक्षमा हानिको योग पाउने तथा विपक्षीहरूमा विजय पाउनको लागि महान परिश्रम गर्नेवाला तथा निकै ठूलो कूटनीतिद्वारा दृढतापूर्वक अगाडि सर्नेवाला, रोग र विपक्षीहरूमाथि काबू पाउने भएको, निकै ठूलो उन्नतिको गुप्त र गहीरा योजनाहरू तयार पार्ने भएको र आफूभित्र भविष्यको दृढतासहित अमर आशा राखेर वृद्धितिर दगुर्दै रहने खालको तथा विजयी रहने भएको अनि शीलको वास्ना नगरेर स्वार्थयुक्त कर्म गर्ने खालको व्यक्ति होला।

कु० नं० १०१२

१० ८
११ ९ ७
१२ ६
१ ३ ५
२के. ४

जुन व्यक्तिको मिथुन राशिको केतु लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस स्त्री स्थानमा महान् कष्ट सहने र गृहस्थी भित्र निकै क्लेशसित

कु० नं० १०९३

१० ८
११ ९ ७
१२ ६
१ ३के. ५
२ ४

रहेर अनेक न्यूनता अनुभव गर्ने खालको, व्यापारमा परतन्त्रताको योग पाउनेवाला र व्यापारमा कमी वा महान् परिश्रम पाउने भएको, थकाई अनुभव गर्ने भएको, दैनिक गुजारा गर्न पनि निकै अपठेरा युक्तिहरूले काम चलाउनेवाला, भोगादि पक्षमा निकै बर्ता न्यूनता पाउने भएको र केही अधिकार चेष्टाको द्वारा व्यापार र गृहस्थीको सुख प्राप्तिको योजना बनाउने वाला, लौकिक उन्नतिका लागि अनेक गुप्त चाल चल्ने खालको व्यक्ति होला।

जुन व्यक्तिको कर्कराशिको केतु लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस आफ्नू जीवनमा अनेक थरिका महान् कष्ट अनुभव गर्ने भएको

कु० नं० १०९४

१० ८
११ ९ ७
१२ ६
१ ३ ५
२ ४के.

र पेटभित्र अलि तल्लो भागमा वा गुदामा अनेक थरिका कष्ट पाउने खालको समयको दैनिक दिनचर्यामा अनेक थरिका कष्ट सहनेवाला जीवनको यथार्थतालाई सार्थक तुल्याउनका लागि निकै गहीरो र जबरदस्त योजना तयार गर्ने भएको, आयुमा कहिले काहीं हताश हुने पनि सम्भावना पाउने भएको, पुरातत्त्वको शक्तिको हानि पाउने भएको, जीवनको मूल्यमा निकै न्यूनता बढी वेदना, भइरहेर पनि भित्र यौटा बलियो शक्तिको संचार पाउने खालको, अलि अभिमानी स्वभाव भएको र धैर्यले काम लिन नजान्ने खालको व्यक्ति होला।

जुन व्यक्तिको सिंहराशिको केतु लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस निकै ठूलो भाग्यमा परेशानी मात्रेवाला, भाग्यको सम्बन्धमा साना-

कु० नं० १०९५

१० ८ ११ ९ ७ १२ ६ १ ३ ५के. २ ४

ठूला झञ्झट सहनेवाला, भाग्योदयको चिन्ता मात्रे भएको तथा यशको न्यूनता पाउने खालको र धर्ममा हानि पाउनेवाला तथा धर्ममा उचित रीतिले श्रद्धा नराख्नेवाला, धर्म-कर्मको ज्ञान पनि नभएको अनि न्याय एवं सत्य तथा अहिंसाको पालन गर्न नसक्नेवाला र ईश्वरमा श्रद्धा विश्वासको अभाव भएको परलोकको विषयमा कुनै वास्ता नगर्ने भएको तथा भाग्यको उन्नतिका लागि निकै धैर्य र कठिनाईको गुप्त रूपले बराबर सामना गरिरहने खालको व्यक्ति होला।

जुन व्यक्तिको कन्याराशिको केतु लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस पिता स्थानमा केही न्यूनता पाउनेवाला, व्यापार आदिमा केही विघ्न-

कु० नं० १०९६

१० ८ ११ ९ ७ १२ ६के. १ ३ ५ २ ४

बाधा सहने भएको, व्यापारको उन्नति गर्ने सम्बन्धमा निकै ठूलो दृढता वा धैर्यले काम गर्नेवाला, मान-सम्मान उन्नति र पदोन्नतिको बाटोमा डटेर रहिरहनेवाला स्फूर्ति र अन्धविश्वासका साथै अगाडि हिंड्दै रहने खालको तथा गुप्त ज्ञानका कर्मयोग र हिम्मतबाट काम गर्ने भएको अनि स्वार्थयुक्त कर्म गर्ने भएको, अन्त्यसम्म उन्नतिको दृढतालाई प्राप्त गरेर छाड्ने खालको व्यक्ति होला।

जुन व्यक्तिको तुलाराशिको केतु लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस धेरै थरि लाभ पाउनेवाला तथा द्रव्य प्राप्तिका लागि महान् हठधर्मबाट र महान् गुप्त युक्तिहरूबाट काम सिद्ध पार्ने भएको, निकै बर्ता लाभ पाउनका लागि गहीरो प्रयत्न गर्दै रहने भएको लाभ प्राप्तिको सम्बन्धमा स्थिर र स्थायी योजना बनाउने भएको र लाभको सम्बन्धमा सित्तैको साधन पाउने चेष्टा गर्ने भएको, र लेन-देनको व्यवहारको भित्र आफ्नू स्वार्थ सिद्धिको बढी ध्यान राख्ने खालको तथा लाभको सम्बन्धमा हृदय भित्र लुकेको स्थिर भावनाहरूलाई सदैव स्थान दिंदै रहनाले अकस्मात् लाभ पाउने खालको व्यक्ति होला।

कु० नं० १०९७

१० ८
११ ९ ७के.
१२ ६
१ ३ ५
२ ४

जुन व्यक्तिको वृश्चिक राशिको केतु लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस बढी धन व्यय गर्ने योग पाउने भएको तथा स्थिर खर्च गर्ने खालको र अन्य स्थानको सम्बन्धमा निकै बढी परिश्रम र कष्ट-बाधा सहेर बलियो बाटो तयार पार्ने भएको र खर्चको सम्बन्धमा स्थिर शक्ति पाउनका लागि निकै कठिन भन्दा पनि कठिन प्रयास गर्दा-गर्दा यौटा बलियो तहसम्म पुग्ने भएको र खर्चको सम्बन्धमा बर्ता लापरवाहीले आँखा चिम्लेर शक्तिको प्रयोग गर्ने खालको र बढी खर्चको सम्बन्धमा बाधा उठेर सङ्कटहरू सहने खालको तर गुप्त धारणाहरूमा निकै दह्रोपना राख्न जान्ने भएको तथा साहस र हिम्मतले काम सिद्ध पार्ने खालको व्यक्ति होला।

कु० नं० १०९८

१० ८के.
११ ९ ७
१२ ६
१ ३ ५
२ ४

# मकर लग्न हुनेको - भविष्यका तारीखहरू

सन् १९९६ को वर्षमा- गुरु नीच भएर लग्नमा चल्नेछन् यसैनिम्ति शरीर स्वास्थ्यमा दुर्बलता रहने छ। ता० ७/१/९६ बाट ता० २९/१/९६ सम्ममा भाग्यको केही दुर्बलता रहला। ता० २८/१/९६ देखि भाग्य र पुरुषार्थ कर्मको सफलता रहने छ, मान प्रभाव बढ्ला। ता० १०/५/९६ बाट सुख शान्ति सफलता रहने छ। ता० ११/६/९६ बाट भाग्यमा केही बाधा आउला र आंशिक सफलता रहला। ता० १६/११/९६ देखि ता० २२/१२/९६ सम्ममा भाग्य र लाभको सफलता बनिरहला, त्यसपछि व्ययभार बढ्ने छ।

कु० नं० १०९९

सन् १९९७ को वर्षमा- ता० १/१/९७ बाट व्यय बढी रहने छ। ता० २१/१/९७ देखि लाभको उन्नति रहने छ। ता० १६/३/९७ देखि समय नाफा-हानि दुवैको मिलेर समान चल्नेछ। ता० २६/९/९७ देखि भाग्य र लाभको उत्तम सफलता रहने छ। सुख-प्राप्ति र मान प्रभावको उच्च साधन चल्नेछन्। ता० १७/११/९७ देखि १६/११/९७ सम्ममा उन्नतिमा केही बाधा रहने छ। ता० १७/११/९७ देखि २५/१२/९७ सम्ममा सफलता र लाभ रहने छ।

कु० नं० ११००

# मकर लग्नमा- सुनौला तारीखहरू

सन् १९९८ को वर्षमा- तारीख १६/११/९८ देखि भाग्य केही सप्रन्दै जानेछ। ता० २६/२/९८ देखि लाभको पूर्ण सफलता रहला। ता० २४/३/९८ देखि धन-मानको सफलता रहने छ। ता० २६/५/९८ देखि भाग्यमा न्यूनता वा कमजोरी रहने छ। ता० ४/८/९८ देखि भाग्यमा सुधार आउला। ता० १८/८/९८ सम्म रहिरहने छ। त्यसपछि केही न्यूनता रहने छ। ता० ६/१०/९८ बाट ता० २२/११/९८ सम्ममा लाभ उत्तम रहने छ। त्यसपछि ता० ३१/१२/९८ सम्ममा बढी व्यय रहला र भाग्यमा केही न्यूनता आउला।

कु० नं० ११०१

११ ९ १२ १० ८ १ ७ २ ४ ६ ३ ५

सन् १९९९ को वर्षमा - प्रथम दुइ साता अलि दुर्बल रहला। ता० १५/१/९९ देखि समय सप्रन्दै जानेछ। ता० २/५/९९ देखि समय अलि घर्कने छ। ता० ११/६/९९ देखि फेरि समय सप्रन्दै जाला। ता० ६/७/९९ देखि भाग्यमा केही न्यूनता रहने छ। ता० २/९/९९ देखि भाग्यमा अझै न्यूनता चलि रहने छ। ता० १९/११/९९ देखि ता० १५/१२/९९ सम्ममा भाग्यको सफलता रहिरहला, त्यसपछि केही न्यूनता आउनै सक्तछ।

कु० नं० ११०२

११ ९ १२ १० ८ १ ७ २ ४ ६ ३ ५

# मकर लग्नमा- सुनौला तारीखहरू

सन् २००० को वर्षमा - ता० ६/१/२००० बाट समयमा न्यूनता चल्नेछ। ता० ३०/१/२००० बाट भाग्यको सफलता रहला तर यस वर्षमा खर्च बर्ता रहला र शरीर स्वास्थ्यमा अनेक बाधा आउला। ता० १३/४/२००० देखि घरेलू सुखमा वृद्धि रहनेछ। ता० ६/५/२००० बाट बुद्धिद्वारा लाभ र सन्तानको सफलता रहने छ। ता० १/६/२००० बाट समय अलि कष्ट-बाधाको रहने छ। ता० ११/९/२००० देखि समय प्रायः सफलता र उन्नतिमा रहने छ। ता० ३/१२/२००० देखि ता० २९/१२/२००० सम्म समय बढी व्ययको चल्नेछ।

कु० नं० ११०३

११ ९
१२ १० ८
१ ७
२ ४ ६
३ ५

सन् २००१ को वर्षमा - ता० ४/१/२००१ देखि प्रायशः समय बढी व्ययको रहला। ता० २२/२/२००१ देखि भाग्योन्नतिको समय भएर पनि व्यय बढी रहने छ। ता० ३/३/२००१ बाट लाभको अधिकता रहने छ र सफलता मिल्दै रहला। ता० १५/८/२००१ बाट उन्नतिमा केही बाधा आउला। ता० २१/१०/२००१ बाट भाग्योन्नतिको समय लाभदायक रहला। ता० २७/११/२००१ बाट भाग्योन्नतिको समय लाभदायक रहला। ता० २८/११/२००१ बाट ता० २९/१२/२००१ सम्ममा प्रायः समय कमजोर र बढी व्ययको रहला।

कु० नं० ११०४

११ ९
१२ १० ८
१ ७
२ ४ ६
३ ५

## मकर लग्नहुनेको - सुनौला तारीखहरू

सन् २००२ को वर्षमा - ता० १/१/२००२ बाट समय दुर्बल र हानिकारक रहने छ। ता० २/२/२००२ बाट भाग्यमा सफलता रहने छ।

कु० नं० ११०५

ता० २२/३/२००२ बाट केही अशान्तिले लाभ चल्दै रहला। ता० ४/५/२००२ बाट उन्नतिको मार्गमा बाधा-कष्ट रहने छ। ता० २/६/२००२ बाट भाग्य केही सप्रन्दै जानेछ। ता० १७/६/२००२ बाट भाग्यमा सुधार र सुख शान्ति रहला। ता० १८/१०/२००२ बाट भाग्यमा कष्ट-बाधा रहने छ। ता० १/१२/२००२ बाट ३१/१२/२००२ सम्म भाग्यमा कष्ट-बाधा रहने छ। ता० १/१२/२००२ बाट ३१/१२/२००२ सम्ममा भाग्योन्नति र सफलता रहने छ, लाभको वृद्धि रहला।

सन् २००३ को वर्षमा- ता० १/१/२००३ बाट व्यय बढी रहने छ। ता० १४/२/२००३ बाट भाग्य र लाभको राम्रो सफलता चल्नेछ, मान

कु० नं० ११०६

प्रभाव बढ्ने छ। ता० ४/८/२००३ बाट भाग्योन्नतिमा विघ्न-बाधा र दुर्बलता आउने छ। ता० २२/८/२००३ बाट फेरि भाग्योन्नति रहने छ, मान-प्रभाव बढ्ने छ। ता० १७/१०/२००३ बाट उन्नतिमा बाधा पर्ला र अनेक झ्याउला आइलाग्नन्। ता० ४/१२/२००३ देखि ३१/१२/२००३ सम्ममा मान प्रभाव र इज्जत बढ्ला धनागम होला।

# मकर लग्न हुनेको - सुनौला तारीखहरू

सन् २००४ को वर्षमा- ता० १/१/२००४देखि समय विपरीत रहने छ। ता० १८/१/२००४ देखि भाग्यको समय राम्रो आउला। ता० १२/२/२००४ देखि एक महीनासम्म धनको पक्षमा आंशिक बाधा रहला, त्यसपछि पुरुषार्थ कर्मले सफलता प्राप्त होला। ता० १४/४/२००४ देखि गृहस्थी एवं व्यापारमा हानि हुन सक्तछ। ता० २३/८/२००४ देखि भाग्य सप्रन्दै जानेछ। ता० १६/९/२००४ देखि फेरि धनको न्यूनता रहने छ। ता० १६/११/२००४ देखि ३१/१२/२००४ सम्म भाग्य र लाभको सफलता रहला।

कु० नं० ११०७

११ ९ १२ १० ८ १ ७ २ ४ ६ ३ ५

सन् २००५ को वर्षमा- ता० १/१/२००५ बाट भाग्यमा दुर्बलता रहला। ता० १५/१/२००५ बाट भाग्य सप्रन्दै जानेछ। ता० १०/४/२००५ सम्म प्रायः समय उत्तम रहला। ता० २३/४/२००५ सम्म भाग्यमा सुधार चल्दै रहला। ता० १०/६/२००५ बाट व्यापार र गृहस्थीमा उन्नति रहला। ता० ६/७/२००५ बाट भाग्य फेरि दुर्बल भएर जाला। ता० २६/८/२००५ बाट २३/९/२००५ सम्म भाग्योन्नति रहला, अनि लाभमा न्यूनता आउला। ता० २४/१२/२००५ बाट फेरि व्यापारमा उन्नति र धनागम होला।

कु० नं० ११०८

११ ९ १२ १० ८ १ ७ २ ४ ६ ३ ५

# मकर लग्न हुनेको - सुनौला तारीखहरू

सन्२००६ को वर्षमा - ता० ३/१/२००६ देखि भाग्यको समय राम्रो रहला। ता० २९/१/२००६ देखि भाग्यमा सुधार चल्ने छ र गृहस्थी एवं व्यापारमा केही बाधा आउन सक्दछ। ता० २६/३/२००६ देखि धनको पक्ष सप्रन्दै जाला। ता० ९/७/२००६ देखि भाग्यमा दुर्बलता आउन सक्दछ। ता० २५/७/२००६ देखि भाग्यमा सफलता रहने छ। ता०१५/८/२००६ बाट फेरि भाग्यको सफलता घट्तै जाला। ता० ६/१०/२००६ बाट ता० २२/१२/२००६ सम्म भाग्यको सफलता चलिरहला, त्यसपछि समय केही कमजोर रहने छ।

कु० नं० ११०९

११ ९
१२ १० ८
१ ७
२ ४ ६
३ ५

सन् २००७ को वर्षमा - ता० १/१/२००७ बाट भाग्यको समय उन्नतिदायक रहने सम्भावना धेरै छ। ता० ४/५/२००७ बाट उन्नतिमा न्यूनताले कष्ट दिन सक्दछ। ता० २/९/२००७ बाट भाग्यमा सुधार रहने छ। व्यापारमा धनागम होला। ता० १९/९/२००७ देखि भाग्यमा केही न्यूनता आउला। ता० १८/११/२००७ बाट भाग्यमा सफलता तथा अन्य स्रोतबाट धनागम होला। ता० २८/१२/२००७ सम्म प्रायः लाभदायक समय रहने छ।

कु० नं० १११०

११ ९
१२ १० ८
१ ७
२ ४ ६
३ ५

# कार्य–सिद्धिको विषय

मकर लग्न हुने व्यक्तिहरूको- पुरुषार्थको सफलता र दाजु-भाई दिदी-बहिनीको सम्बन्धमा बृहस्पति सदैव केही न केही दुर्बलता वा कष्ट-बाधाको सूचक छ। अनि भाग्य र धर्म-कर्म पालनको सम्बन्धमा बुध सदैव केही न केही झ्याउलाहरूको सूचक छ। यसै निम्ति बृहस्पतिवारको दिन भोजन गर्नुभन्दा अगावै गाईलाई आधा किलो जति गुड खान दिनु पर्दछ र बुधवारको दिन एक पाउ जति हरियो फल खान दिए उत्तम हुनेछ। राहु र केतु स्वभावैले दुःख दिने खालका ग्रह हुन्। यस निम्ति पक्षीलाई अन्न र माछालाई पीठोको गोली बनाएर खान दिनु।

कु० नं० ११११

११ ९
१२ १० ८
१ ७
२ ४ ६
३ ५

मकर लग्न हुने हरूको- धनागमको सम्बन्धमा शनि र मंगल श्रेष्ठ छन् र उन्नतिको सम्बन्धमा शुक्र र बुध उत्तम छन्, व्यापारमा चन्द्रमा श्रेष्ठ छन्। यसै निम्ति पंचाङ्गमा जुन-जुन वर्ष महीनामा शनि, वृश्चिक, मकर, कुम्भ, कर्क, कन्या, तुलामा आउँछन् र मङ्गल वृश्चिक, मकर, कुम्भ, मीन, मेष, वृष, तुलामा आउँछन् र शुक्र- वृश्चिक, कुम्भ, मकर, तुला, कर्क, वृषभमा आउँछन् र बुध वृश्चिक, कुम्भ, तुला, कर्क, कन्या, मकरमा आउँछन् र चन्द्र, कर्क, कन्या, तुला, मकर, कुम्भ, मेषमा जब-जब आउँछन् तब-तब धनको वृद्धि गर्दै रहन्छन्।

कु० नं० ११११२

११ ९
१२ १० ८
१ ७
२ ४ ६
३ ५

# मकर लग्न हुनेहरूको–प्रतिकूल समय ज्ञान

कु० नं० १११३

| | | | |
|---|---|---|---|
| ११ | | ९ | |
| १२ | १० | | ८ |
| | १ | ७ | |
| २ | ४ | | ६ |
| | ३ | ५ | |

(सदैव कालको लागि)

निम्नलिखित ग्रह जब-जब यी राशिहरूमा पञ्चाङ्गमा आउँछन्, तब-तब ती वर्षहरूमा, महीनाहरूमा र दिनहरूमा लाभप्रद र सुखदायक समय रहने छ।

सू०- तुला,धनु, कुम्भ र कर्क।
चं०- सिंह, वृश्चिक, धनु र मिथुन।
मं०- कर्क, सिंह, धनु र मिथुन।
बु०- सिंह, धन, मीन र मिथुन।
गु०- धनु, मकर, कुम्भ, मिथुन र सिंह।
शु०- धनु, मिथुन, सिंह र कन्या।
श०- धनु, मेष, मिथुन र सिंह।
रा०- धनु, मकर, कुम्भ, मेष, कर्क, सिंह र तुला।
के०- मकर, कुम्भ, मेष, कर्क, सिंह र तुला

*नोट-* सालाना फलादेशको ज्ञान गर्नका लागि शु० श० रा० के० यी चारग्रहबाट जान्नु पर्दछ र मासिक फलादेशको ज्ञान गर्नका लागि सू० बु० शु० मं० यी ग्रहहरूबाट हेर्नुपर्दछ अनि दैनिक फलादेशको ज्ञानका लागि चन्द्रमाबाट हेर्न थाल्नुपर्दछ र जब-जब कुनै ग्रह सूर्यबाट अस्त हुन्छ, तब-तब त्यो न्यून र दुर्बल फल दिन्छ।

# मकर लग्न हुनेहरूको- अनुकूल समय ज्ञान

कु० नं० १११४

११ ९ १२ १० ८ १ ७ २ ४ ६ ३ ५

(सदैव कालको लागि)

निम्नलिखित ग्रह जब-जब यी राशिहरूमा पञ्चाङ्गमा आउने छन् तब-तब ती वर्षहरूमा, महीनाहरूमा र दिनहरूमा-लाभप्रद र सुखदायक समय रहने छ।

सू०- वृश्चिक, मीन, मेष, वृष र मिथुन।
चं०- कन्या, तुला, मकर, कुम्भ, मीन, मेष, वृष र कर्क।
मं०- मेष, वृष, कन्या, तुला, वृश्चिक, मकर, कुम्भ र मीन।
बु०- कन्या, तुला, वृश्चिक, मकर, कुम्भ, मेष र वृष।
गु०- मीन, मेष, वृष, कर्क, कन्या, तुला र वृश्चिक।
शु०- तुला, वृश्चिक, मकर, कुम्भ, मीन, वृष, कर्क र कन्या।
श०- वृश्चिक, मकर, कुम्भ, मीन, वृष, कर्क र कन्या।
रा०- वृश्चिक, मीन, वृष, मिथुन र कन्या।
के०- वृश्चिक, धन, मीन र कन्या।

*नोट-* सालाना फलादेशको ज्ञान गर्नका लागि श० गु० रा० के० यी चार ग्रहहरूबाट हेरे उत्तम हुन्छ। मासिक फलादेश ज्ञानका लागि सू० बु० शु० मं० यी चार ग्रहहरूबाट हेरे उत्तम हुनेछ। दैनिक फलादेश जान्नका लागि चन्द्रमाबाट ज्ञात गरे उचित हुनेछ। यी बाहेक अन्यान्य ज्ञानका लागि अखण्ड भाग्योदय दर्पण हेर्नुहोस्।

# मकर लग्नान्तर-सूर्यफलम्

जुन व्यक्तिको मकरराशिको सूर्य लग्नबाट प्रथम स्थानमा छ भने त्यो मानिस शारीरिक कष्ट सहनेवाला तथा शरीरले केही कठिन झैं कार्य गर्नेवाला र शरीरमा केही नमिलेका अंग भएको अथवा कुनै विकार पाउने खालको र केही गर्मी र बिफर ठ्यौला आदिको बिमारी पाउनेवाला लामो आयुष्य पाउने र जीवनमा केही अशान्तिको योग पाउने भएको र पुरातत्त्वबाट केही फाइदा प्राप्त गर्नेवाला, स्त्रीको स्थानमा केही क्लेशको योग पाउने खालको र व्यापारको स्थानमा केही कष्ट-बाधा सहेर काम सिद्ध पार्ने वाला र सौन्दर्यको सम्बन्धमा रङ्ग-रूपको कमी अर्थात् कुरूपता पाउने भएको तथा शरीरमा जुन वेला पनि क्रोध राख्ने खालको र केही गुप्तशक्ति राख्ने खालको होला।

कु० नं० १११५

११ ९
१२ १०सू. ८
१ ७
२ ४ ६
३ ५

जुन व्यक्तिको कुम्भराशिको सूर्य लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस धन-संग्रह स्थानमा हानि र कमी पाउने भएको एवं कुटुम्ब वियोग पाउनेवाला र धनको कष्ट अनुभव गर्ने भएको तर पुरातत्त्व धनबाट लाभ प्राप्त गर्ने खालको र जीवनको दिनचर्यालाई निकै बढी ढाँचा र धनाढ्य झैं व्यतीत गर्न जान्नेवाला, गुप्त-शक्ति बलबाट धनको अनुचित लाभ पाउनेवाला, प्रभावशाली जीवनभित्र केही बिझाउने खालको न्यूनताको योग पाउने भएको आयुमा केही वृद्धि पाउनेवाला, धन संग्रहका लागि अनेक साना-ठूला कष्ट-बाधा सहन गर्ने खालको व्यक्ति होला।

कु० नं० १११६

११सू. ९
१२ १० ८
१ ७
२ ४ ६
३ ५

जुन व्यक्तिको मीनराशिको सूर्य लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस आफ्नो जीवन कालमा प्रभावी समय व्यतीत गर्ने भएको तथा आयुमा वृद्धि पाउनेवाला र पुरातत्त्व शक्तिबाट फाइदा पाउने भएको, भाग्यको उदर स्थानमा केही हानि भेट्टाउनेवाला अनि धर्मको स्थानमा पनि केही हानि पुऱ्याउने र दाजु-भाइको स्थानमा केही क्लेश वा हानिको योग पाउने भएको अनि बल र पुरुषार्थमा भित्री केही दुर्बलता-न्यूनता तथा बाहिरी केही तेजी वा दरिलो भावको योग पाउने भएको र गुप्तशक्तिको साहसले तमोगुणी मार्गको अनुसरण गर्ने खालको व्यक्ति होला।

कु० नं० ११९७

११ ९
१२ सू. १० ८
१ ७
२ ४ ६
३ ५

जुन व्यक्तिको मेष राशिको सूर्य लग्नबाट चतुर्थ स्थानमा छ भने त्यो मानिस पुरातत्त्वको संचित शक्तिबाट निकै बढी फाइदा प्राप्त गर्नेवाला अर्थात् गुप्त धन गुप्त रीतिले प्राप्त गर्नेवाला र मातृस्थानमा केही विशेषता र केही हानिको योग पाउने भएको र आयुको वृद्धि पाउने खालको र पिता स्थानमा हानि वा क्लेश भेट्टाउने भएको, मान-प्रतिष्ठाको स्थानमा न्यूनता पाउने र राज-समाजमा दुर्बलता भेट्ने तथा गुप्तशक्तिको भण्डार राख्ने दैनिक जीवनको दिनचर्यालाई निकै बढी अलमस्त भएर व्यतीत गर्ने खालको, केही अकर्मण्य वा छोटो कर्म गर्ने खालको र तेजी राख्ने किसिमको होला।

कु० नं० ११९८

११ ९
१२ १० ८
१सू. ७
२ ४ ६
३ ५

जुन व्यक्तिको वृषराशिको सूर्य लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस सन्तान पक्षमा हानि र क्लेश सहने भएको, विद्या स्थानमा दुर्बलता पाउने खालको र कुरा-कानीमा कटु-भावले कुरा गर्नेवाला बुद्धिमा लुकाउने शक्ति र कष्ट-बाधाहरू द्वारा विचार पुऱ्याएर काम गर्ने जान्ने तथा धाक लगाएर बढी बोल्ने तथा झूठो शान दर्शाउने खालको, लाभ प्राप्तिको वृद्धि गर्नका लागि अनेक युक्ति-बल लगाउने भएको, चिन्तामा गाडिइरहने, पुरातत्त्वको केही गुप्त जानकारी प्राप्त गर्नेवाला, आयुको सम्बन्धमा केही उत्तमताको योग पाउने भएको, शीलको न्यूनता भएको व्यक्ति होला।

कु० नं० १११९

११ ९
१२ १० ८
१ ७
२सू. ४ ६
३ ५

जुन व्यक्तिको मिथुन राशिको सूर्य लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस आफ्नू निकै प्रभाव राख्ने भएको, बर्ता क्रोध गर्ने खालको र दैनिक जीवनको दिनचर्यामा ठूलो गौरव अनुभव गर्ने खालको, लामू आयुष्य पाउनेवाला र मावली पक्षबाट हानि भेट्टाउने भएको, शत्रुलाई नष्ट पार्न सक्ने खालको र पुरातत्त्वको केही सामान्य लाभ प्रभाव द्वारा नै प्राप्त गर्न समर्थ भएको र रोगादि अनेक झ्याउलाहरूबाट नै जीवनाधार शक्तिलाई प्राप्त गर्ने खालको तथा गूढ-भन्दा पनि गूढ युक्तिहरूलाई पनि आफ्नू बुद्धिले सपारेर बाँगो प्रभाव शक्ति कायम पारेर राख्न सक्ने र खर्च बढी गर्नेवाला र जीवनमा केही विघ्न-बाधा पनि अनुभव गर्ने भएको किन्तु हिम्मत र साहसद्वारा आफ्नू काम सिद्ध पार्नेवाला, धैर्यवान् व्यक्ति होला।

कु० नं० ११२०

११ ९
१२ १० ८
१ ७
२ ४ ६
३सू. ५

जुन व्यक्तिको कर्कराशिको सूर्य लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस लामू आयु पाउनेवाला स्त्री पक्षमा केही क्लेश पाउने भएको र गृहस्थीमा विघ्न-बाधा अनुभव गर्नेवाला, अनि व्यापारको सम्बन्धमा अनेक झ्याउला र बाधा सहने खालको तथा व्यापारकै पंक्तिमा साहसिक र प्रभावशाली कार्य गर्नेवाला र व्यापारको विषयमा गुप्त र गहीरो कटु युक्तिहरूले आफ्नू काम सिद्ध पार्ने भएको अनि शरीरमा थकान र विघ्न-बाधा अनुभव गर्ने भएको, इन्द्रियादिक भोग सम्बन्धी मार्गमा बाधा सहने खालको अनि स्त्री पक्षमा केही अपूर्णताको अनुभव गर्ने भएको र कटुताद्वारा आफ्नू विग्रन लागेको काम सिद्ध पार्न जान्ने खालको, माता-पिताको स्थानमा केही वैमनस्यताको योग पाउने भएको साहसी र हिम्मतले सबै काम गर्न सक्ने खालको व्यक्ति होला।

कु० नं० ११२१

११ ९
१२ १० ८
१ ७
२ ४सू. ६
३ ५

जुन व्यक्तिको सिंहराशिको सूर्य लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस लामू आयु पाउनेवाला तथा निकै प्रभावशाली जीवन व्यतीत गर्नेवाला, पुरातत्त्वको प्रभावशाली फाइदा पाउने भएको, आफ्नू दैनिक दिनचर्याको सम्बन्धबाट अर्कालाई केही बाधा पुऱ्याउने भएको, धन-संग्रहको स्थानमा अनेक साधन र उपाय वृद्धिका लागि जति गरे पनि धनको कमी वा हानिको योग पाउने भएको र कौटुम्बिक क्लेश पाउने भएको र निकै ठूलो जबरदस्त भेद-शक्तिको तागत राख्ने खालको र आफ्नू रहन-सहनको किसिममा आफू भित्र गौरव अनुभव गर्ने खालको र आफ्नू भविष्यको केही पनि वास्ता नगर्ने, रिसाहा खालको होला।

कु० नं० ११२२

११ ९
१२ १० ८
१ ७
२ ४ ६
३ ५सू.

जुन व्यक्तिको कन्या राशिको सूर्य लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस लामू आयुष्य पाउने भएको र भाग्यस्थानमा हानि पाउने खालको वा यशमा न्यूनता भेट्टाउने र धर्म स्थानमा हानि पाउनेवाला र संचित पुरातत्त्व शक्तिको उचित लाभ भाग्यबलद्वारा प्राप्त गर्नेवाला तथा जीवनको दिनचर्या भाग्यमानी झैं व्यतीत गर्नेवाला एवं भाग्योन्नतिका लागि ठूला-ठूला प्रभावशाली प्रपंच गर्न जान्नेवाला किन्तु भाग्योन्नतिमा बाधा तथा कष्ट आदिको योग पाउनेवाला तथा दाजु-भाइको स्थानमा न्यूनता वा क्लेश पाउने भएको र स्वार्थयुक्त धर्मको पालन गर्न जान्ने तथा सज्जनहरू झै निवास गर्ने खालको व्यक्ति होला।

कु० नं० ११२३

११ ९
१२ १० ८
१ ७
२ ४ ६सू.
३ ५

जुन व्यक्तिको तुला राशिको सूर्य लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस पिता स्थानमा हानिको योग पाउनेवाला तथा क्लेशको योग पाउनेवाला र आयुको सम्बन्धमा केही न्यूनता पाउने खालको र व्यापार आदिमा महान् परिश्रम र कष्ट-बाधा सहने भएको र कतिपय सानो कर्म गर्ने खालको, मान-प्रतिष्ठामा कमीको योग भेट्टाउने तथा कहिले काहीं मान प्रतिष्ठामा पूरा विशेष प्रकारको आघात सहने भएको, राज-स्थानमा कहिले काहीं क्लेश र अशान्ति सहने तथा भूमि-भवनको केही पैतृक फाइदा पाउने भएको तथा सुखका साधनहरूमा केही गुप्त युक्तिहरूले वृद्धि पाउनेवाला तथा दिनचर्यामा अशान्ति अनुभव गर्ने खालको व्यक्ति होला।

कु० नं० ११२४

११ ९
१२ १० ८
१ ७सू.
२ ४ ६
३ ५

जुन व्यक्तिको वृश्चिक राशिको सूर्य लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस आयुको राम्रो लाभ पाउने भएको तथा दिनचर्यालाई निकै प्रभाव र लाभका साथै व्यतीत गर्नेवाला र पुरातत्त्वको लाभ र पैतृक लाभ पनि निकै प्रभावका साथ प्राप्त गर्ने भएको अनि आमदानीको बाटोमा केही गूढ योजनाहरूको प्रभावबाट काम सिद्ध पार्ने तथा कटु युक्तिहरूले फाइदा प्राप्त गर्न जान्नेवाला र सन्तान पक्षमा केही हानिको योग र क्लेशको योग पाउनेवाला तथा विद्याको स्थानमा पनि केही न्यूनता एवं कष्ट-बाधा पाउने भएको र कुरा-कानी बोल-चालमा केही गुप्त र केही कटुताले काम लिने खालको होला।

कु० नं० ११२५

११ ९ १२ १० ८सू. १ ७ २ ४ ६ ३ ५

जुन व्यक्तिको धनुराशिको सूर्य लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस पुरातत्त्व शक्तिको केही हानि पाउनेवाला र जीवनको प्रभावमा केही कमी अनुभव गर्ने र आयुको सम्बन्धमा केही दुर्बलता पाउने भएको र बर्ता धन खर्च गर्ने खालको र गुप्त शक्तिहरूको थोरै प्रयोग गर्ने भएको तथा शत्रुमा प्रभाव राख्ने खालको र मावली पक्षमा आंशिक हानि पाउनेवाला, दैनिक दिनचर्या र रहन-सहनमा केही अशान्ति अनुभव गर्ने र खर्चको स्थानमा केही कष्ट-बाधा अनुभव गर्ने भएको किन्तु प्रभावयुक्त किसिमले खर्च संचालन गर्दै रहने भएको र नाभिभन्दा तल पेटभित्र केही विकार भएको साहसी व्यक्ति होला।

कु० नं० ११२६

११ ९सू. १२ १० ८ १ ७ २ ४ ६ ३ ५

# मकर लग्नान्तर-चन्द्रफलम्

जुन व्यक्तिको मकरराशिको चन्द्रमा लग्नबाट प्रथम स्थानमा छ भने त्यो मानिस मनोयोगको उच्च फाइदाले खूब व्यापार गर्न जान्ने अनि स्त्री पक्षमा सौन्दर्य र सुखका साथसाथै आंशिक कमी अनुभव गर्नेवाला एवं बढी भोग खोज्ने भएको र प्राप्त पनि गर्नेवाला अनि मनभित्र र तनभित्र धेरै बर्ता कामवासना राख्ने भएको तथा शरीरको रङ्ग केही गोरो भएको तथा ससुरालीबाट इज्जत सम्मान पाउने भएको र आफ्नू मनमा 'म ठूलो' भन्ने गौरव मान्ने भएको र व्यापारको र मान-सम्मानको उन्नतितर्फ बर्ता ध्यान दिने भएको र मनको शान्तिभित्र केही गुप्त अशान्तिको योग पाउने खालको निकै उपकारी व्यक्ति होला।

कु० नं० ११२७

११ ९
१२ १०चं. ८
१ ७
२ ४ ६
३ ५

जुन व्यक्तिको कुम्भराशिको चन्द्रमा लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस व्यापारको पंक्तिमा विशेष धन एकत्रित पार्न जान्ने भएको र खूब ठूलो व्यापार गर्नेवाला अनि केही ससुरालीबाट लाभ पाउनेवाला र मनको गति र मनको कर्मबाट धन कमाउने र कमाएको धन संग्रह गर्ने योग पाउने भएको र स्त्रीको सुखमा न्यूनता र बन्धन पाउनेवाला, जीवनको दैनिक दिनचर्यामा उन्नतिको योग पाउनेवाला, पुरातत्त्व सम्बन्धको फाइदा पाउने भएको र मानसिक शक्तिको द्वारा लौकिक उन्नतिको पूरा-पूरा ध्यान राखेर कार्य गर्नेवाला, कुटुम्बको सम्बन्धमा केही विवाद पाउनेवाला, मनमा केही अशान्तिको योग पाउने खालको व्यक्ति होला।

कु० नं० ११२८

११चं. ९
१२ १० ८
१ ७
२ ४ ६
३ ५

जुन व्यक्तिको मीन राशिको चन्द्रमा लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस व्यापारको उन्नतिका लागि बढी परिश्रम गर्ने भएको, मनोबल द्वारा उन्नति गर्ने भएको, निकै उत्साह तथा साहसद्वारा कार्य सम्पन्न पार्ने, प्रभावशाली राम्री स्त्री भेट्टाउने खालको र भोग प्राप्तिको विशेष इच्छा राख्नेवाला अनि भाग्योन्नतिको बढी ध्यान राखेर काम गर्नेवाला, भाग्यमानीमा गनिने खालको तथा धर्म-कर्मको पनि विचार राख्ने अनि मनमा प्रसन्नता तथा केही कुराको पनि वास्ता नराख्ने, स्त्री र ससुरालीबाट हिम्मतको केही योग पाउने, दाजु-भाइ दिदी-बहिनीको सहयोग पाउने खालको होला।

कु० नं० ११२९

११ ९
१२ चं. १० ८
९ ७
२ ४ ६
३ ५

जुन व्यक्तिको मेषराशिको चन्द्रमा लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस आफ्नो परिवारमा गृहस्थीको उत्तम सुख भोग्न पाउने भएको, राम्री स्त्री प्राप्त गर्नेवाला तथा आमाको सुख पाउने भएको, भवन भूमिको लाभ पाउनेवाला र ससुरालीबाट सुखका साधन पाउने भएको, उत्तम भोग विलास प्राप्त गर्ने भएको अनि व्यापारको खूब सुख प्राप्त गर्नेवाला सुखपूर्वक व्यापार गरेर मनोबलको द्वारा उन्नति र मान-सम्मान पाउने खालको पिता स्थानबाट उन्नति र व्यापारको मुख्य ाटो फेला पार्ने भएको र लौकिक तथा सामाजिक कार्यहरूमा चातुर्य र ुशलता पाउने खालको तथा राज-समाजमा मान-सम्मान पाउनेवाला अनि ाधैं मन-मौजी झैं आनन्दी व्यक्ति होला।

कु० नं० ११३०

११ ९
१२ १० ८
१चं. ७
२ ४ ६
३ ५

जुन व्यक्तिको वृषराशिको चन्द्रमा लग्नबाट पाँचौ स्थानमा छ भने त्यो मानिस व्यापारिक श्रेणीमा ठूलो उच्च ज्ञान राख्ने भएको र बर्ता कुशाग्र बुद्धि र बलियो मनले आफ्नू व्यापारको काम गर्दै रहनेवाला र सुन्दर एवं बुद्धिमती स्त्री पाउने भएको, बुद्धि र मनमा बढी काम-वासना राख्ने खालको तथा। लौकिक व्यवहारहरूमा निकै बर्ता दक्षता र अनुभव राख्ने खालको अनि सन्तान शक्तिको सहारा पाउने र खूब चर्को र दरो स्वरमा कुराकानी गरेर अरूलाई थर्काउने तथा आमदानीको स्थानमा न्यूनता र बेवास्ताको योग पाउने भएको, स्त्रीको बुद्धिमा बर्ता तीव्रता वा तेजी पाउने भएको अनि निकै कार्यकुशल र भोगी व्यक्ति होला।

कु० नं० ११३१

११ ९
१२ १० ८
१ ७
२चं. ४ ६
३ ५

जुन व्यक्तिको मिथुन राशिको चन्द्रमा लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस व्यापारमा कष्ट-बाधा पाउनेवाला र मानसिक परेशानीहरू र परिश्रम सहने खालको तथा कुनै प्रकारले एवं परतन्त्रताको व्यापार पाउनेवाला र स्त्री स्थानमा कष्ट-बाधा सहने भएको तथा भोग विलासको कमी पाउने भएको र ससुरालीको दुर्बलता पाउनेवाला, बढी धन खर्च गर्ने खालको र मनोयोगद्वारा रोग र शत्रुहरूबाट सुरक्षा पाउने किसिमको काम गर्ने तथा मावली पक्षमा कहिले कुनै कार्य सहायक सहयोगको व्यवस्था पाउने खालको तथा स्त्री पक्षमा मानसिक विरोध तथा केही झगडा-झञ्झट पनि सहने खालको व्यक्ति होला।

कु० नं० ११३२

११ ९
१२ १० ८
१ ७
२ ४ ६
३चं. ५

जुन व्यक्तिको कर्कराशिको चन्द्रमा लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस राम्री स्त्री पाउनेवाला, उत्तम ससुराली पाउने भएको तथा खूब भोग विलास प्राप्त गर्ने खालको, निकै राम्रो र बलियो व्यापार गर्नेवाला तथा व्यापारमा प्रशंसा र प्रसन्नता पाउने खालको तथा व्यापारलाई मनोयोगको पूर्ण दृढता साथ चलाउन जान्ने, व्यापारको सफलतामा मनमा ठूलो गौरव अनुभव गर्ने खालको र गृहस्थीको राम्रो आनन्द पाएर हृदयमा शान्तिको योग प्राप्त गर्नेवाला र स्त्रीको प्रशंसा तथा स्वभाव र प्रभावले मुग्ध हुने खालको, लौकिक कार्यहरूमा बढी चातुर्य र तत्परता दर्शाउने खालको र सौन्दर्य प्रेमी होला।

कु० नं० ११३३

११ ९ १२ १० ८ १ ७ २ ४चं. ६ ३ ५

जुन व्यक्ति सिंह राशिको चन्द्रमा लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस स्त्री स्थानमा हानिको योग पाउनेवाला, गृहस्थीको कारणहरूले गर्दा मानसिक क्लेश सहने भएको, इन्द्रिय भोगादि पक्षमा न्यूनता पाउने भएको, व्यापारको पंक्तिमा साना-ठूला झ्याउलाहरू र कष्ट इत्यादि परिश्रम सहनेवाला, मनोयोगको निकै गहीरो ज्ञानबाट व्यापारको काम गर्न जान्ने तथा व्यापारमा केही परतन्त्रता एवं केही विदेश आदिको सम्पर्क पाउने भएको, धनको वृद्धिका लागि निकै ध्यान र बढी प्रयत्न गर्नेवाला, पुरातत्त्वसित सम्बन्धित कार्यद्वारा काम चलाउन जान्ने खालको, दैनिक दिनचर्यामा उत्साह पाउने र गुप्तज्ञानी व्यक्ति होला।

कु० नं० ११३४

११ ९ १२ १० ८ १ ७ २ ४ ६ ३ ५चं.

जुन व्यक्तिको कन्या राशिको चन्द्रमा लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस भाग्यवती स्त्री पाउनेवाला, इन्द्रिय भोगादिकमा सात्विकताको योग पाउने भएको, सौम्य सुन्दर पत्नी पाउने खालको, मनोयोगद्वारा इन्द्रिय संयम गर्ने भएको, मनमा भोगादिक भावनाहरू भए पनि धर्म-मार्गमा मनलाई लगाउनेवाला, किन्तु धर्मको वास्तविक कार्यहरूमा न्यूनता पाउने र धर्मको तल्लो तहसम्म पुग्दा मनमा विकार पाउने भाग्य शक्तिले व्यापारको सफलता तथा संचालन शक्ति प्राप्त गर्ने खालको, व्यापारमा भाग्यमानी मानिने भएको धेरै दाजु-भाइ दिदी-बहिनीहरू भएको होला।

कु० नं० ११३५

११ ९
१२ १० ८
१ ७
२ ४ ६चं.
३ ५

जुन व्यक्तिको तुला राशिको चन्द्रमा लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस बर्ता उच्च शानदार व्यापार गर्ने खालको, व्यापारको कार्यक्रमबाट नै बढीमान सम्मान पाउनेवाला, मनोयोगद्वारा काम गरेर उन्नति पाउने खालको तथा इन्द्रिय र राज-समाजको लौकिक तथा व्यापारिक कार्य गर्नाले मनमा अभिमान तथा गौरव प्राप्त गर्नेवाला, राज-समाज र गृहस्थीमा इज्जत पाउने भएको माता-पिताको सहारा पनि पाउनेवाला, स्त्री स्थानबाट गौरव पाउनेवाला, स्त्रीमा प्रभाव पाउने र स्त्रीबाट सुख प्राप्त गर्ने भएको, व्यावहारिक कार्यक्रमलाई योग्यता र कुशलताद्वारा पूर्ण पार्नेवाला, इज्जतलाई उच्च भावना र आशा भन्दा केही न्यून पाउने व्यक्ति होला।

कु० नं० ११३६

११ ९
१२ १० ८
१ ७चं.
२ ४ ६
३ ५

जुन व्यक्तिको वृश्चिकराशिको चन्द्रमा लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस स्त्री स्थानबाट साधारण लाभ र केही मनलाई थोरै अशान्ति पाउनेवाला, र गृहस्थीको केही सुख-दुःख र केही सुख-दुःख मिश्रित अनुभव गर्ने खालको तथा इन्द्रियादिकको सामान्य भोग सुख प्राप्त गर्नेवाला, व्यापारमा सामान्य लाभ पाउने खालको, आमदानीको अभावको कारणले मनमा दुःख अनुभव गर्ने खालको तथा विद्या-बुद्धिमा तीक्ष्णता पाउने भएको तथा कुरा-कानीमा तेजी देखाउन निकै बाठो भएको र व्यापारको उन्नतिको सम्बन्धमा मनको भित्र आलस्य पाउने भएको, सन्तान सम्बन्धमा वृद्धि पाउने खालको तथा केही परतन्त्रता झैं स्थितिबाट लाभ पाउने खालको व्यक्ति होला।

कु० नं० ११३७

११ ९
१२ १० ८चं.
१ ७
२ ४ ६
३ ५

जुन व्यक्तिको धनराशिको चन्द्रमा लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस स्त्री स्थानमा हानि पाउने खालको र इन्द्रिय भोगादिक पक्षमा कमी पाउने भएको र दुर्बलताको शिकार हुने भएको, व्यापारमा हानि पनि पाउने खालको, व्यापारमा बाहिरी सम्बन्धबाट शक्ति पाउनेवाला, बढी धन व्यय गर्ने भएको र गृहस्थीको सम्बन्धमा अनेक कष्ट-बाधा सहने किसिमको र शत्रु स्थानमा केही शीतलताले आफ्नू काम सिद्ध पार्न जान्ने भएको, मनमा केही अशान्ति र एक्लो छु भन्ने अनुभव गर्ने खालको र गृहस्थी एवं व्यापार र खर्चको सम्बन्धमा मानसिक बलद्वारा तथा अन्यान्यको सम्बन्ध सहाराबाट आफू पारी तर्ने खालको व्यक्ति होला।

कु० नं० ११३८

११ ९चं.
१२ १० ८
१ ७
२ ४ ६
३ ५

# मकर लग्नान्तर-भौमफलम्

जुन व्यक्तिको मकर राशिको मङ्गल लग्नबाट प्रथम स्थानमा छ भने त्यो मानिस धेरै सुख प्राप्त गर्ने भएको तथा बढी सम्पत्तिवाला र धेरै लाभ पाउने भएको र मातृस्थानमा केही विशेषता पाउने, राम्रो गौरवर्ण सलक्क परेको शरीरवाला, आफूमा मस्ती र लापरवाही राख्ने भएको एवं सित्तैंको साधन र लाभ प्राप्त गर्नेवाला र व्यापारमा न्यूनता पाउने भएको, स्त्री पक्षमा सुखको न्यूनता अनुभव गर्ने खालको, बढी स्वार्थको ध्यान राख्नेवाला, इन्द्रिय भोगादिमा केही कमीको योग पाउने भएको, व्यापार र भोगादिको पक्षमा केही गुप्त युक्तिहरू द्वारा सुखको साधन पनि बनाउन जान्नेवाला, 'म जान्ने र म ठूलो' भन्ने अभिमानी व्यक्ति होला।

कु० नं० ११३९

११ ९
१२ १०मं. ८
१ ७
२ ४ ६
३ ५

जुन व्यक्तिको कुम्भराशिको मङ्गल लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मनिस धन लाभ पाउनेवाला, केही भूमि-भवन पनि पाउने भएको, धन संग्रह गर्नका लागि आमदानीलाई त्यसैमा जोर्ने प्रयत्न गर्दै रहने भएको, त्यसै कारणले सुख प्राप्तिका साधन वस्तुहरूको न्यूनता पाउने भएको, धन संग्रहमा तैपनि न्यूनता नै अनुभव गर्नेवाला, सन्तान र विद्याको स्थानमा केही लाभ र सुखको अनुभव केही त्रुटिका साथै प्राप्त गर्नेवाला, केही भाग्यमानीको ताकत पाउनेवाला, दैनिक दिनचर्यामा केही सुखको अनुभव गर्ने खालको र धनमा नै सुख देख्ने भएको, अनि मातृ-सुखमा केही बन्धन पाउने व्यक्ति होला।

कु० नं० ११४०

११मं. ९
१२ १० ८
१ ७
२ ४ ६
३ ५

जुन व्यक्तिको मीन राशिको मङ्गल लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस आफ्नू बल पुरुषार्थमा वृद्धि पाउने, दाजु-भाइको शक्ति भेट्टाउने र मातृस्थानको अनि भूमि-भवनको लाभ पाउनेवाला र आफ्नू सुखद परिश्रमबाट खूब लाभ पाउने अनि लाभ र परिश्रमले नै सुखको अनुभव गर्ने खालको हिम्मतका साथै बढी अमूल्य परिश्रम गर्ने भएको, शत्रु पक्षमा प्रभाव पार्न जान्ने भएको, व्यापारमा बढी लाभ कमाउन जान्ने खालको राज-समाजबाट लाभ र सुख पाउने र मान प्रतिष्ठा प्राप्त गर्नेवाला, बडो लापरवाह व्यक्ति होला।

कु० नं० ११४१

११ ९ १२ मं. १० ८ १ ७ २ ४ ६ ३ ५

जुन व्यक्तिको मेष राशिको मङ्गल लग्नबाट चौथो स्थानमा छ भने त्यो मनिस धेरै धन र भवन भूमिबाट आमदानी पाउने खालको, बर्ता सुख प्राप्त गर्ने भएको र व्यापारको सम्बन्धमा आलस्य र दुर्बलताको योग पाउने खालको स्त्री स्थानमा न्यूनता र सुखको हानि तथा ससुरालीबाट थोरै फाइदा पाउने भएको, इन्द्रिय भोगादिमा पनि न्यूनता पाउनेवाला मातृ पक्षबाट बढी फाइदा पाउने भएको, आमदानी र आवश्यक पदार्थहरू निकै सजिलोसित कुनै फिक्री चिन्ता नगरी पाउनेवाला, मान इज्जत पाउने र राज-समाजमा पनि सुख भेट्टाउनेवाला, आफ्नू सुख र आफ्नू फाइदाको सामुन्ने कुनै अन्य कामलाई केही महत्व नदिने व्यक्ति होला।

कु० नं० ११४२

११ ९ १२ १० ८ १मं. ७ २ ४ ६ ३ ५

जुन व्यक्तिको वृषराशिको मङ्गल लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस आफ्नू बुद्धिले खूब धन कमाउने भएको, विद्या र सन्तान सजिलैसित प्राप्त गर्नेवाला, पुरातत्त्वको सम्बन्धमा सुख र लाभ प्राप्त गर्नेवाला, गूढ र कष्टदायक मार्गबाट पनि सुख र लाभ पाउनेवाला, अन्यान्य स्थानको सम्बन्धबाट पनि सुख र लाभ पाउने भएको, मातृपक्षमा केही न्यूनता मान्नेवाला र बढी खर्च गर्ने अनि विद्याको बलले सुखी हुने भएको, स्थिर विचारवाला, सधैं लाभको योजना बनाउने व्यक्ति होला।

कु० नं० ११४३

११ ९
१२ १० ८
१ ७
२मं. ४ ६
३ ५

जुन व्यक्तिको मिथुन राशिको मङ्गल लग्नबाट छैठौं स्थानमा छ भने त्य मानिस आंशिक परतन्त्रताको प्रभावशाली कर्मद्वारा लाभ र आमदानी पाउने भएको र मातृस्थानको सुखका साधनहरूमा न्यूनता पाउनेवाला र रोग, विपत्तीहरूलाई हटाएर सुखका साधन उत्पन्न गर्न जान्ने भएको तथा लाभ पाउनेवाला, शत्रुपक्षबाट फाइदा पाउनेवाला र अधिक व्यय गर्ने खालको, शरीरमा सौन्दर्य र गौरव लाभ पाउनेवाला सबै काममा सफलता पाउने खालको, धर्म-कर्ममा श्रद्धा गर्नेवाला, आत्मामा सुख अनुभव गर्ने भएको, स्वार्थ सिद्धिको बर्ता ध्यान राख्ने खालको, बाँगा युक्तिहरूले अनेक थरिका लाभ प्राप्त गर्ने खालको साहसी व्यक्ति होला।

कु० नं० ११४४

११ ९
१२ १० ८
१ ७
२ ४ ६
३मं. ५

जुन व्यक्तिको कर्कराशिको मङ्गल लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस स्त्री स्थानमा हानि पाउने भएको र मातृस्थानमा न्यूनता पाउने खालको, व्यापारको सम्बन्धमा दुर्बलता पाउनेवाला, आमदानीको स्थानमा अशान्ति भेट्टाउने भएको, गृहस्थीको सुखमा हानि अनुभव गर्ने भएको तथा शरीरको वृद्धिका लागि साधन जोर्ने खालको र उन्नति र मानवृद्धिको लागि धेरै प्रयत्न गर्दै रहेर पनि असफलताहरू नै हात पर्ने भएको, त्यति भए पनि धनको आंशिक सुख प्राप्त गर्ने किसिमको र इन्द्रिय सुखहरूमा केही न्यूनता वा केही गुप्त राख्ने खालको व्यक्ति होला।

कु० नं० ११४५

११ ९ १२ १० ८ १ ७ २ ४मं. ६ ३ ५

जुन व्यक्तिको सिंहराशिको मङ्गल लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस बर्ता परिश्रमका प्रयत्नहरू द्वारा धेरै बढी लाभ कमाउने भएको र अझ बढी धन कमाउन वा पाउनका लागि बर्ता कूटनीतिहरू द्वारा काम सिद्ध पार्नेवाला र धनको प्राप्तिका लागि ठूला-ठूला सुखलाई पनि छाडिदिने भएको तथा अनेक अशान्ति सहनेवाला, मातृस्थानको वियोग सहने भएको तथा माता र भवन-भूमि सुखमा न्यूनता पाउनेवाला र पुरातत्त्व सम्बन्धमा विशेष धन पाउनेवाला तथा आयुमा र दैनिक जीवनको दिनचर्यामा पनि सुख प्राप्त गर्ने भए तापनि घरेलू सुखका साधनहरूमा वास्तविकताको न्यूनता पाउने खालको र परिश्रम एवं कष्ट-बाधा तथा साहसले खूब काम गर्ने खालको व्यक्ति होला।

कु० नं० ११४६

११ ९ १२ १० ८ १ ७ २ ४ ६ ३ ५मं.

जुन व्यक्तिको कन्या राशिको मङ्गल लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस ठूलो भाग्यमानी तथा भाग्य-शक्तिको नै द्वारा निकै ठूला-ठूला सुख भोग्नेवाला, भवन-भूमि प्राप्त गर्नेवाला, माताको सुख लाभबाट आनन्द पाउने भएको अनेक प्रकारका लाभ भाग्यशक्तिले नै पाउने र बढी खर्च गर्ने भएको अनि अन्य स्थानको सम्पर्कबाट पनि सुख-लाभ पाउने भएको र स्वार्थ युक्त भएर धर्म-कर्मको पालन गर्ने भएको तथा धर्मात्मा आमा प्राप्त गर्ने किसिमको र दैवी सहायताहरू बाट पनि सुख-शान्ति एवं फाइदा पाउने भएको अनि मस्त निस्फिक्री, पुरुषार्थी तथा दाजु-भाइ दिदी-बहिनी धेरै भएको व्यक्ति होला।

कु० नं० ११४७

११ ९ १२ १० ८ १ ७ २ ४ ६मं. ३ ५

जुन व्यक्ति तुलाराशिको मङ्गल लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस शानदार व्यापारको माध्यमबाट इन्तजामको साथै आमदानी पाउने खालको, राज-स्थानबाट फाइदा पाउने भएको, पिता स्थानबाट बढी लाभ पाउने खालको, खूब सुख भोग्नेवाला, आफ्नू इज्जतको फाइदाका कारणहरू बाट आत्माभित्र महान् गौरव अनुभव गर्नेवाला, शरीरमा सौन्दर्य र सुखका विशेष संचार पाउनेवाला, भूमि र पुत्रलाभ पाउने भएको, विद्या लाभ पाउनेवाला, सुखका लागि वा धन-प्राप्तिका निम्ति बुद्धिमा पूर्ण बल लगाउने भएको, मातृशक्ति पाउने र समाजमा सुख एवं प्रभाव भेट्टाउने, प्रभावपूर्ण बोल्ने र प्रभावकारी कर्म गर्ने खालको व्यक्ति होला।

कु० नं० ११४८

११ ९ १२ १० ८ १ ७मं. २ ४ ६ ३ ५

जुन व्यक्तिको वृश्चिक राशिको मङ्गल लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस अनेक सुखद साधनहरूद्वारा निकै लाभ पाउने र आमदानीमा उन्नति गर्ने भएको, मातृस्थानको लाभ पाउने खालको, धन संग्रहका लागि कष्टबाधा सहने खालको, कुटुम्बमा वैमनस्यता पाउने भएको, थोरै विद्या ग्रहण गर्ने, सन्तान लाभ पाउने तथा शत्रुस्थानमा ठूलो प्रभाव पार्नाले मनमा खुसी मान्नेवाला र रोग एवं विपत्तिहरूमा विजय पाउने भएको र मावली पक्षबाट केही सुख-लाभ पाउनेवाला र झगडा तथा झ्याउलाहरूको मामलामा पनि फाइदा पाउने भएको र अनेक थरिका लाभ र सुखका साधन तथा भूमि-भवनलाभ स्वतः प्राप्त गर्ने खालको व्यक्ति होला।

कु० नं० ११४९

११ ९
१२ १० ८मं.
१ ७
२ ४ ६
३ ५

जुन व्यक्तिको धनुराशिको मङ्गल लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस आमाको र मातृभूमिको हानि पाउने भएको र आमदानीमा न्यूनता पाउने खालको एवं सुखका साधनमा दुर्बलता पाउनेवाला र अन्य स्थानको सम्पर्कबाट लाभ र सुख प्राप्त गर्नेवाला अनि स्त्री र गृहस्थीको सुखमा हानि पाउने खालको, व्यापारमा न्यूनता पाउने भएको, दाजु-भाइको स्थानमा केही राम्रो सम्पर्क पाउने भएको र परिश्रम एवं पुरुषार्थबाट धन प्राप्त गर्नेवाला, बढी धन व्यय गर्ने खालको वा शत्रु स्थानमा प्रभाव राख्ने भएको, खर्चको स्थानमा निकै सुख र लाभको योग प्राप्त गर्ने खालको किन्तु इन्द्रिय भोगादि सुखहरूमा न्यूनता पाउने खालको साहसी व्यक्ति होला।

कु० नं० ११५०

११ ९मं.
१२ १० ८
१ ७
२ ४ ६
३ ५

# मकर लग्नान्तर - बुधफलम्

जुन व्यक्तिको मकरराशिको बुध लग्नबाट प्रथम स्थानमा छ भने त्यो मानिस निकै बाठो भाग्यमानी तथा सौम्य र प्रभावशाली अनि धर्म-कर्म मात्रे भएको, केही स्वार्थयुक्त भएर धर्मको पालन गर्ने भएको अनि प्रतिष्ठा पाउनेवाला बर्ता उच्च विवेक राख्ने भएको, शत्रुहरूमा स्वतः विजय प्राप्त गर्ने, शरीरमा केही सामान्य रोग पाउनेवाला, मावली पक्षको उत्तम योग सम्बन्ध पाउनेवाला, गृहस्थ धर्मको पालन गर्ने भएको, व्यापारको काम पनि गर्दै रहनेवाला, भोग-विलासमा सामान्य रुचि राख्ने खालको, पारलौकिक तथा इहलौकिक दुवैतिरको बराबर र उत्तम ध्यान राख्ने भएको अनि ईश्वरमा श्रद्धा विश्वास राख्ने खालको र आफ्नू परिश्रमले मान-सम्मान पाउने खालको होला।

कु० नं० ११५१

११ ९
१२ १०बु. ८
१ ७
२ ४ ६
३ ५

जुन व्यक्तिको कुम्भराशिको बुध लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस ठूलो धनवान् तथा भाग्यमानी अर्थात् आफ्नू भाग्य र परिश्रमकै द्वारा प्रचुर धन प्राप्त गर्ने खालको र काममा सफलता पाउने भएको, धर्मलाई धनको प्रतिस्पर्धामा सानो ठान्ने भएको, ईश्वरमा अलिकति निष्ठा राख्ने भएको, कुटुम्बको साधारणतः राम्रो सुख प्राप्त गर्ने खालको तर कुटुम्बमा अलिकति विग्रह पाउने भएको, कहिले काहीं धनको केही अशान्ति सामान्य प्रकारबाट पाउने खालको, युक्ति तथा बुद्धिद्वारा, दैवसंयोग द्वारा उन्नति पाउनेवाला, महान विवेक र सतोगुणको सहारा लिएर उत्तम स्वार्थसिद्धि गर्न जान्ने भएको तथा मावली पक्षबाट निकै लाभ पाउने भएको र पुरातत्त्वको राम्रो लाभ फेला पार्ने खालको होला।

कु० नं० ११५२

११बु. ९
१२ १० ८
१ ७
२ ४ ६
३ ५

जुन व्यक्तिको मीन राशिको बुध लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस थोरै पुरुषार्थ गर्ने भएको अर्थात् बर्ता अल्छी, थोरै शक्ति बल राख्ने भएको, भावलीको थोरै शक्ति पाउने र भाग्यलाई ठूलो मान्ने तथा भाग्यको दुर्बल शक्तिबाट पनि बर्ता फाइदा प्राप्त गर्ने भएको, ईश्वरमा पूर्ण विश्वास राख्नेवाला, यथाशक्ति धर्म-कर्मको पालन गर्ने भएको र परिश्रमका कार्यहरूमा अनेक झ्याउला. सहने भएको, शत्रु पक्षबाट बर्ता कष्ट-बाधा मान्नेवाला किन्तु भाग्य शक्तिबाट रक्षा पाउनेवाला, प्रभावमा केही न्यूनता पाउने भएको, दाजु-भाइसित क्लेशको योग पाउनेवाला, भाग्योदयमा केही विलम्बको योग पाउने भएको र केही दुर्बल साहस र हिम्मत तथा निर्धो नीतिवाला होला।

कु० नं० ११५३

११, ९, १२ बु., १०, ८, १, ७, २, ४, ६, ३, ५

जुन व्यक्तिको मेषराशिको बुध लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस भाग्यको शक्तिले र केही परिश्रमद्वारा सुख प्राप्त गर्नेवाला अनि केही भावलीबाट र विवेक शक्ति एवं युक्तिहरूबाट आफ्नू स्थानमा नै भाग्यको विकास पाउने भएको, सुख र भाग्यको सम्बन्धमा केही सामान्य बाधाहरूपछि वृद्धि पाउने भएको, आमाको शक्ति पाउने भएको र आमासित केही वैमनस्यता तथा उत्साह प्राप्त गर्ने भएको केही भवन-भूमिको सुख प्राप्त गर्नेवाला, पिता स्थानबाट पनि लाभ प्राप्त गर्ने भएको र मान-प्रतिष्ठा पाउनेवाला, सुखद धर्मको पालन गर्ने अनि शत्रु स्थानमा समभाव पाउने खालको व्यक्ति होला।

कु० नं० ११५४

११, ९, १२, १०, ८, १ बु., ७, २, ४, ६, ३, ५

जुन व्यक्तिको वृष राशिको बुध लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस विवेक तथा महान् चातुर्यद्वारा आफ्नू काम सिद्ध पार्ने भएको धर्मको राम्रो ज्ञान राख्नेवाला, कुनै धार्मिक विषयमा निकै प्रभावपूर्ण कुरा गर्ने, धर्म पालन गर्नमा केही रजोगुणको बाटो समाउने भएको, निकै बाठा सन्तान पाउनेवाला तथा विद्याको लौकिक र अलौकिक ज्ञान प्राप्त गर्ने भएको अनि समयानुसार भाग्य र बुद्धिको सहायता सदैव प्राप्त गर्ने खालको र बुद्धि तथा सन्तानको सहयोगले भाग्य वृद्धि पाउनेवाला, धेरै थरिका धन-धान्य प्राप्त गर्ने भएको, बुद्धिकै योगले शत्रुमाथि प्रभाव जमाउने खालको तथा सन्तान पक्षमा केही झ्याउलो पाउने भएको व्यक्ति होला।

कु० नं० ११५५

११ ९
१२ १० ८
१ ७
२बु. ४ ६
३ ५

जुन व्यक्तिको मिथुन राशिको बुध लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस निर्धो भाग्य पाउने भएको तथा भाग्योन्नतिको बाटोमा सदैव केही न केही बाधा वा झ्याउला पाउनेवाला र मावली पक्षमा वृद्धिको योग पाउने अर्थात् प्रभावशाली मावली भएको र धर्मको बाटोमा निकै दुर्बलता पाउने तथा केही अपठेरो धर्मको पालन गर्ने भएको र आफ्नू विवेक शक्ति र भाग्य शक्तिद्वारा प्रभाव पाउने भएको र विवेक तथा भाग्य शक्तिद्वारा नै रोग र शत्रु तथा विघ्न-बाधाहरूमा विजय प्राप्त गर्नेवाला तथा बढी धन व्यय गर्ने भएको अनि शान्तियुक्त क्रोध आफूमा राख्न सक्ने, दाता, दुश्मन खालको होला।

कु० नं० ११५६

११ ९
१२ १० ८
१ ७
२ ४ ६
३बु. ५